● वर्ष ११ ● अङ्क १ ● भाद्र २०६६ ● पूर्णाङ्क १२१


## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर,
  फोन: ०१-२१०११२६


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## पितृ विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधवार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

*समाजलाई अध्यात्मतर्फ अग्रसर गराउन, आध्यात्मिक चेतनाको विकास गराउन सद्गुरुको महत्त्व बुझाउँदै आध्यात्मिक धरोहरहरुका बारेमा खोज अनुसन्धान गरी समाजमा उजागर गर्दै आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको रुपमा गोरक्ष निखिल वाणीले सगौरव १० वर्ष पूरा गरेको सहर्ष जानकारी गराउँदछौँ। शुरुमा संस्थाको मुखपत्रको रुपमा निस्केको गोरक्ष निखिल वाणी पत्रिका आज देशकै राष्ट्रिय मासिक पत्रिकाको रुपमा मात्र नभई सरकारी मान्यतामा पनि 'क' वर्गको पत्रिकाको रुपमा स्थापित भएको छ। पत्रिकाको प्रकाशन आरम्भ आफैमा कठिन कार्य हो भने त्यसभन्दा पनि कठिन कार्य भनेको पत्रिका निरन्तररुपमा प्रकाशित गर्नु रहेछ। समाजमा चुनौतीको रुपमा रहेको पत्रिका प्रकाशन र यसको निरन्तरताको १० वर्ष हाम्रो लागि धेरै उतारचढाव विभिन्न संघर्षहरुका वाबजुद व्यतीत हुँदै गए। अन्य पत्रिकाको तुलनामा आध्यात्मिक पत्रिका प्रकाशन अझै दुष्कर कार्य रहेछ। समाज आफ्नै तालमा अगाडि बढिरहेको छ, भौतिकताको रसमा चुर्लुम्म डुबेको समाजमा आध्यात्मिक पत्रिका निकाली आध्यात्मिक भावभूमि बनाउँदै अगाडि बढ्नु कठिन रहेछ। तैपनि हाम्रा आदरणीय पाठकहरुको सहयोग, हाम्रा शुभचिन्तकहरुको आत्मीयता, हाम्रा कार्यकर्ताहरुको खटाइ आदिले नै पत्रिकाले निरन्तरता पाएकोमा दुईमत छैन। यसैले पत्रिकाले सगौरव १० वर्ष पार गरेको पावन अवसरमा हाम्रा आत्मिक पाठकहरुमा, प्रत्यक्ष एवं अप्रत्यक्षरुपमा सहयोग गर्ने सम्पूर्ण शुभचिन्तक महानुभावहरुमा हार्दिक धन्यवाद व्यक्त गर्न चाहन्छौँ र आउँदा दिनहरुमा पनि यहाँहरु सबैको सहयोग निरन्तररुपमा प्राप्त भइरहनेछ भन्ने आशा राख्दछौँ। सबैभन्दा प्रमुखरुपमा त परमपूज्य सद्गुरुदेवहरुको असीम कृपा एवं आशीर्वादले नै पत्रिकाले विभिन्न समस्याहरु, कठिन परिस्थितिहरु पार गरी अगाडि बढ्न सकेकोमा सद्गुरुदेवहरुप्रति नतमस्तक हुँदै कोटिकोटि नमन अर्पण गर्दछौँ।*

*यसपालीको अंकलाई हामीले 'पितृ विशेष'को रुपमा निकालेका छौँ। हिन्दु धर्म संस्कृतिमा मानिसको जीवनकालमा मात्रै होइन जीवनपश्चात् पनि आदर सम्मानका साथ ठूलो महत्त्व दिएको पाइन्छ। शरीर हुँदासम्म शरीरगत संस्कार गरिन्छ भने मरेपछि पनि पितृको लागि भनेर फेरि विभिन्न प्रक्रिया गरिन्छ। आत्मालाई उद्धार गर्न, सशक्त गराउन, तल्ला योनिहरुमा भट्किएका आत्मालाई कल्याण गर्न श्राद्ध, तर्पणलगायतका विभिन्न प्रक्रिया गर्ने गरिन्छ। मनुष्यलोक भनेजस्तै पितृलोकको पनि आफ्नै अस्तित्व रहेको पाइन्छ। मनुष्यको मृत्युपछि पितृलोक हुँदै मृतात्माहरुले आफ्नो यात्रा तय गरेका हुन्छन्। उनीहरुको यात्रा सहज होस् भनी छोरानातिले श्राद्ध गर्ने गर्दछन्। उनीहरुप्रति श्रद्धा अर्पण गर्ने, स्मरण गरी आत्मीयता प्रकट गर्ने, उद्धार गर्ने प्रयोजनले गरिने प्रक्रियालाई श्राद्ध भन्ने गरिन्छ। पितृहरुका बारेमा शास्त्रमा विभिन्न आख्यान पनि पाइन्छन्। कैयौँ भौतिकवादीहरु बिनाखोज अनुसन्धान पितृलोकको बारेमा अविश्वास व्यक्त गर्दछन्। विश्वास अविश्वासभन्दा परको पितृलोकको बारेमा यस अंकमा केही चर्चा गरेका छौँ। व्यापक र विराट् अर्थ बोकेको पितृसत्ताको बारे अझै थुप्रै खोज अनुसन्धानको खाँचो महसुस गरेका छौँ, त्यसैले आंशिकरुपमा समेटिएका विषयलाई पूर्ण नठान्नुहोला।*

*अन्तमा यस अंकमा भएका कमी कमजोरीका लागि यहाँहरुसँग र परमपूज्य सद्गुरुदेवहरुसमक्ष क्षमा माग्दै आवश्यक सल्लाह सुझावको अपेक्षा गर्दछौँ।*

*अस्तु!*

# पितृ

देवीदेवता उच्च सत्ताका हुन्छन्, प्रेतहरूको सत्ता तल्लो हुन्छ । पितृसत्ता यी दुवैको मध्यको सत्ता हो । पितृ यस्ता उच्च आत्मा हुन्छन् जो आफ्नो उच्च स्वभाव र संस्कारका कारण अरूलाई यथासम्भव सहायता गरिरहन्छन्। यिनीहरूमा मनुष्यमा भन्दा बढी शक्ति रहेको हुन्छ । सूक्ष्म जगत्सँग सम्बन्ध रहने भएकोले उनीहरूलाई जानकारी पनि अधिक मात्रामा हुन्छ । जोसँग उनीहरूको सम्बन्ध हुन पुग्दछ, उसलाई विभिन्न प्रकारका सहायता पुऱ्याउँछन्, भविष्यज्ञान भएको हुनाले सम्बद्ध व्यक्तिहरूलाई सतर्क पनि गर्दछन् तथा धेरै प्रकारका कठिनाइहरू हटाउँदै सफलताको लागि सहायता गर्ने प्रयत्न पनि गर्दछन् । यस्ता दिव्य पितृहरू सदाशयी, सद्भावसम्पन्न र सहानुभूतिपूर्ण हुन्छन्। उनीहरू कुमार्गमा लाग्नेदेखि असन्तुष्ट हुन्छन् र सत्मार्गमा हिँड्नेहरूसँग प्रसन्न हुन्छन् । सत्पात्रहरूलाई यिनीहरूले सत्प्रेरणा तथा मातृपितृवत् स्नेह प्रदान गर्दछन् । यिनीहरू अशरीरी हुन्छन्, शरीरधारीसँग सम्पर्क राख्नमा उनीहरूको आफ्नै सीमा हुन्छ । जोसुकैसँग पनि यिनीहरू सम्पर्क गर्न सक्दैनन्। कोमलता र निर्भीकता, श्रद्धा र विवेक-दुवैको जहाँ उचित सन्तुलन र सामञ्जस्य हुन्छ, यस्तो अनुकूल भावभूमि नै पितृहरूसँग सम्पर्कका लागि अनुकूल हुन्छ ।

पितृहरूका पनि अनेक स्तर हुन्छन् र सोहीअनुसार उनीहरूले सहायता गर्दछन् । विदेशी लेखक सी. डब्ल्यू. लेडबीटरले आफ्नो पुस्तक 'Invisible Helpers'मा लेखेका छन् कि सात लोकहरूमा माथिका छ लोकसँग सम्बन्धित छ प्रकारका पितृ आत्मा हुन्छन् र प्रत्येक स्तरका दायित्व तथा गतिविधिहरू भिन्न-भिन्न हुन्छन् । प्रकृति, संस्कार, योग्यता एवं अभिरुचिअनुरूप यी पितृ सहायता एवं मार्गदर्शन गर्दछन् । लेडबीटरले आफ्नो उपरोक्त पुस्तकमा विश्वका विभिन्न समुदायमा प्रचलित पितृसम्बन्धी धारणाहरूको विवरण प्रस्तुत गर्दै यो स्पष्ट गरेका छन् कि पुरानो युनानी एवं रोमन सभ्यतामा यी आस्था केवल अस्पष्ट धारणाको रूपमा विद्यमान छन् । तर इजिप्ट तथा चीनको सांस्कृतिक आस्थामा पितृसम्बन्धी विस्तृत कथा तथा कर्मकाण्डको विद्यमानता छ । इजिप्ट-सभ्यताका धर्मग्रन्थहरूको सारसन्दर्भ 'The Book of Dead' नामक पुस्तकमा संग्रहित छ । त्यसमा पितृहरूको गतिविधिहरूको निरूपण गर्ने नियम तथा प्रक्रियाहरू स्पष्टरूपमा दिइएको पाइन्छ । उनले आफ्नो पुस्तकमा भनेका छन् कि हिन्दुहरूमा श्राद्धको जुन प्रक्रिया प्रतिष्ठित छ तथा त्यससँग सम्बन्धित जुन विवरण छन्, ती सर्वाधिक प्रामाणिक एवं वैज्ञानिक छन् । तर अहिले ती पनि मात्र कर्मकाण्डका रूपमा अवशिष्ट छन् र परम्परागत रीति-रिवाज बनेर रहेका छन् । त्यसको पछाडि सन्निहित तत्त्वज्ञानलाई अधिकांश हिन्दुले बिर्सिसकेका छन् । त्यसैले न स्वयंले नै त्यस प्रक्रियाद्वारा पितृबाट समुचित र पर्याप्त लाभ लिन सकेका छन्, न त पितृ तथा स्वर्गीय आत्माहरूलाई आफ्नो श्रद्धा-भावनाको उचित लाभ पुऱ्याउन सकेका छन् ।

उनले भनेका छन् कि अशरीरी आत्माहरूसँगको सम्पर्कको मूल आधार संकल्प र विचार नै हो । जड वस्तु एवं निष्प्राण कर्मकाण्डको माध्यमबाट पितृहरूसँग आदान-प्रदानको क्रम चल्न सक्दैन किनकि ती सारा क्रियाकलाप भावनात्मक एवं विचारपरक नै हुन्छन् । कर्मकाण्डका प्रक्रिया आवश्यक त छन् तर ती त केवल उपकरण हुन् । तिनको प्रयोग त हुन्छ तर ती स्वयं भने प्रयोग र सञ्चालन एवं परिणामहरूको प्रतिपादनमा असमर्थ छन् । बिनाज्ञान कुनै पनि उपकरणको उचित प्रयोग र सही परिणामको प्राप्ति असम्भव छ । त्यसैले पितृहरूको सत्ताको सही स्वरूपलाई बुझ्न र उनीहरूसँग सम्पर्क गर्नका लागि पात्रता स्वयंमा विकसित गर्नु आवश्यक हुन्छ । यस्तो हुन सक्छ भने पितृहरूबाट देवस्तरको सहयोग प्राप्त गर्न सकिन्छ, जसबाट जीवनलाई समृद्ध, सार्थक एवं सफल बनाउन सकिन्छ ।

पितृहरूका अनेक वर्ग हुन्छन् र देवसत्ताकै जस्तो उनीहरूका क्रियाकलापहरूका क्षेत्र पनि भिन्नभिन्न छन् । प्रत्यक्ष मार्गदर्शन, गूढ संकेत, दिव्य प्रेरणा तथा आकस्मिक सहायता उनीहरूबाट उपलब्ध हुन्छन् । विपत्तिबाट त्राण पाउन, सत्मार्गमा अग्रसर हुन र मानवीयताको क्षेत्रलाई विस्तृत गर्न, सामाजिक प्रगतिको पथ-प्रशस्त गर्नमा पितृहरूको दिव्य अनुदान दैवी वरदान बनेर हाम्रो सामु आउन सक्दछ । सूक्ष्म शक्तिहरूको रूपमा त्यसै पनि तिनीहरू क्रियाशील हुन्छन् । अनीति, अत्याचार र अन्यायका क्रमलाई आकस्मिक अप्रत्याशित रीतिबाट उल्ट्याइदिने चमत्कारी प्रक्रियाहरू विभिन्नपटक उनीहरूको अनुग्रहबाट नै सम्पन्न

हुन जान्छन् । यस्ता श्रेष्ठ पितृहरू वास्तवमै श्रद्धायोग्य छन् । अति प्रचण्ड संकल्पशक्ति भएका यस्ता कैयौँ आत्माहरूको परिचय समय-समयमा मिल्दछ र मानिस यिनीहरूलाई 'पितृ' नामबाट देवस्तरको संज्ञा दिएर पूज्दछन् । यिनीहरू आफ्नो अस्तित्वको प्रमाण आश्चर्यजनक रूपबाट दिइरहन्छन् ।

संकल्प सत्ताका साक्षात् विग्रहस्वरूप यी 'पितृ' इकाइहरू आफ्नो संरचनामा सन्निहित तत्त्वअनुरूप नै गतिविधि गर्दछन् । अर्थात्, यिनीहरू केही सीमित प्रयोजनहरूमा मात्रै सहयोगी हुन सक्दछन् । प्रयोजनहरूको जुन ढाँचामा यी संकल्प सत्ताहरूको अधिक परिचय-लगाव हुन्छ, त्यसको पूर्तिमा ती विशेष सहायक सिद्ध हुन सक्दछन् । प्रार्थना-उपासना, ईश्वर-आराधना, सामाजिक कर्तव्यविशेष आदिमा आकस्मिक सहायताको रूपमा यस्ता पितृसत्ताहरूको अनायास अनुग्रह वर्षन्छ । व्यक्तिका पितृहरू प्रसन्न छैनन् भने देवीदेवताको आशीर्वाद प्राप्त गर्न पनि सम्भव छैन । व्यक्तिको आध्यात्मिक उच्चता प्राप्तिका लागि पितृहरूको महत्त्वपूर्ण योगदान रहन्छ । जय गुरुदेव !

*(सन्दर्भः मरणोत्तर जीवनः तथ्य एवं सत्य)*

---

# एक साधकको अनुभवमा पितृलोक

*आत्मीय पाठकवर्ग, यस सामग्रीमा पितृलोकका विभिन्न रहस्यहरूका बारेमा लेखक (एक साधक) ले प्राप्त गर्नुभएको अनुभव जस्ताको तस्तै उतारिएको छ ।*

पितृलोक यति विराट् रहेछ कि जहाँ सम्पूर्ण कुरा छन् जस्तो लाग्यो– तलदेखि माथिसम्म । समस्त ब्रह्माण्डमा पितृलोकको आफ्नै छुट्टै किसिमको पहिचान रहेछ । पितृलोकको श्राप पर्‍यो भने देवलोक पनि कमजोर हुने रहेछ । कारण के भन्दा पितृलोकको कारणबाट मनुष्यलोकमा फाइदा तथा उन्नति हुने रहेछ । मनुष्यलोकको ऊर्जाको कारणबाट देवलोकको अस्तित्व रहने रहेछ । यस्तै अन्य लोकसँग पनि पितृलोकको सम्बन्ध हुने रहेछ । यस रूपबाट हेर्दा पितृलोकबाट धेरै राम्रो हुने भएकोले नै मलाई योगीज्यूले कृपा गरी यहाँ पठाउनुभयो । नत्र भने मलाई त केही पनि थाहा थिएन । पितृलोकको वृत्तान्त कसरी शुरु गरुँ, कसरी अगाडि बढाउँ र कसरी अन्त गरुँ ? म साह्रै असमञ्जसमा परिरहेछु । सबै कुरा उल्लेख गर्न मन लाग्छ तर उल्लेख गर्नको लागि, बुझाउनको लागि मसँग शब्द नै हुँदैन । अनि त्यतिबेला म अति दुःखी हुन्छु । राम्रो संस्कारवाला माथि-माथि रहन पाउने हुँदा रहेछन् । त्यसैगरी, सुविधा पनि राम्रो हुने रहेछ । संस्कार नभएकाहरू तल-तल रहनुपर्ने हुँदोरहेछ । त्यहीअनुसार सुविधा पनि हुँदो रहेछ । पितृलोक भनेर के गर्नु कुनै ठाउँ यस्तो रमणीय छ जसको व्याख्या गर्न सकिँदैन । त्यस्तै कुनै ठाउँ यस्तो गएगुज्रेको छ जसको नीच शब्दमा भन्नुपर्दा व्याख्या गर्ने शब्द नै छैन । यति नाजुक अवस्था हुनेरहेछ कि त्यहाँको अवस्था हेरेर दया गर्न थाल्यो भने त्यो व्यक्ति स्वयं त्यहीँ पुरिन्छ र ऊ पनि त्यस्तै बन्छ । फेरि ऊ स्वयं माथि आउन सक्दैन र उसलाई फेरि माथि आउन हजारौँ वर्ष लाग्न सक्छ । पितृलोक यस्तो भरपर्दो ठाउँ रहेछ जसको माध्यमबाट सम्पूर्ण ऋषिमुनि, देवदेवी, गुरु आदि सम्पूर्णसँग सम्बन्ध कायम गरी अगाडि बढ्न सम्भव रहेछ । त्यसकारण पनि पितृलोकको महिमा गाइएको रहेछ । त्यसैले त समाजमा अहिले पनि केही उक्तिहरू पाइन्छन् । जस्तै, 'देवताले भरण गरेको (दिएको) कुरा पितृले हरण (हटाइदिने काम) गरिदिन सक्छन् ।' यही आधारमा पितृलाई मान्ने प्रथाको शुरुआत भएको हुनुपर्छ भन्ने मेरो मान्यता छ । पितृलाई मान्दा वा सम्मान गर्दा के फाइदा छ, नमान्दा वा अपमान गर्दा के बेफाइदा छ भन्ने कुरा मैले बल्ल बुझेँ । कुनै पितृलोक (पितृलोकभित्रको उपलोक) यति नाजुक अवस्थामा पाइयो कि जहाँका पितृहरूले हजारौँ वर्ष बितिसक्दा पनि एक अञ्जुली पानी पिउन नपाएको घटना आत्मिकरूपमा अवगत हुन आयो । हुन त पानी चढाएर पितृहरूले त्यो कसरी पाउन सक्छन् भन्ने लाग्न सक्छ, दिएका कुरा कसरी खान सक्छन् भन्ने तर्क आउन सक्छ । तर्क आउनु र नआउनुको संसारभन्दा अत्यन्त बलवान् प्रकृति रहेछ जसले साराका सारा रहस्यहरूलाई आफूमा समाहित गरी छिपाएर राखिरहेको छ, पालिरहेको छ, हुर्काइरहेको छ । जुन पितृहरू नाजुक अवस्थामा छन् तिनीहरूकै शाखा-सन्तानबाट यस्ता तर्क र प्रवृत्ति निस्कने रहेछन् जसको कारणवश सधैँभरि सुख्खा भएर बसिरहन पर्ने रहेछ । उनीहरूलाई तार्न (माथि तान्न) को लागि एउटा न एउटा व्यक्ति जन्मिएर राम्रो संस्कार प्राप्त गरेपछि मात्र सम्भव हुनेरहेछ । होइन भने पितृ राम्रा छैनन् भने जति नै मेहनत गरे पनि, तपस्या गरे पनि, ती दरिद्रस्वरूप पितृले माथि पुग्न नै दिने रहेनछन् । एकपटक पितृलाई पानी चढाउँदा हजारौँ पितृलाई राहत पुग्ने रहेछ र उनीहरूले आफू माथि आउन पाएको खुशियालीमा मद्दत गरिदिने रहेछन् र व्यक्तिले आफूलाई केही मद्दत भएको अनुभव गर्ने रहेछ । हामीले कहिले पनि खोतल्ने चेष्टा गरेनौँ । के कारणले मान्छेहरू आत्महत्या गर्छन् ? के कारण घरमा अशान्ति हुन्छ, मनमा डाह छटपटी हुन्छ ? यी सम्पूर्णको पछाडि केही न केही कारण अवश्य हुन्छ । धेरै-थोरै अन्य कारण पनि हुन सक्छन् तर अधिकांशत मनुष्य जीवन सफल र असफल हुनुमा पितृलोकको कारण नै हुने रहेछ ।

त्यसैले शास्त्रमा 'पितृदेवो भव' भनिएको रहेछ । वास्तवमा यो भनाइ शत प्रतिशत ध्रुवसत्य छ । जसले पितृलाई मान्दैनन्, ढिलो चाँडो दुःख, कष्ट, बाधा, अड्चन आउने नै रहेछ । पितृ खुशी हुनासाथ मनुष्य जातिमा पनि खुशी छाउने रहेछ, दुःखी हुँदा दुःखले घेर्ने रहेछ । सन्तान सुखी हुनु र नहुनुमा पनि यही कारण हुने रहेछ ।

कुनै तहका पितृले जीवनकालमा (मनुष्य जीवन छँदा) संस्कारवान् कार्य केही पनि गरेका छैनन् भने मृत्युपश्चात् उनीहरूको सूक्ष्म शरीर त्यही तहमा गएर रहँदो रहेछ । उसका छोरा-नातिले गरेको पुण्यकर्मको आधारमा क्रमिकरूपमा माथि आउँदो रहेछ । यदि छोरा, नाति, पनाति आदि कुनै पनि पुस्ताले त्यस्ता प्रकारका क्रिया-कर्मादिमा भाग लिएनन् भने ती पितृहरूले दुःख पाउँदा रहेछन् र त्यस्तो प्रकारको दुःख पर्नासाथ तिनीहरूले (पितृहरूले) आफ्ना छोरा, नातिहरूलाई पिर्दा (दुःख दिँदा) रहेछन् । त्यसरी पिर्दा ती सपनामा यदाकदा (आक्कल-झुक्कल) देखिँदा रहेछन् । त्यतिबेला ती पितृहरूमा देह (सूक्ष्म शरीर) सुख्खा हुँदोरहेछ । पानी प्यास (तिर्खा) लाग्ने रहेछ । त्यहाँ कसैले कसैलाई मद्दत गर्न नमिल्ने अवस्था हुँदो रहेछ । एक किसिमले भन्ने हो भने पश्चात्ताप गर्ने लोक पनि रहेछ । त्यसरी सपनामा पितृहरू देखा परे भने पितृको नाममा तर्पण दिँदा (पानी चढाउँदा) उक्त पितृको सूक्ष्म शरीरले त्यो प्राप्त गर्दो रहेछ अर्थात् सूक्ष्म शरीर स्वयंले उक्त जल (पानी) लिएर सन्तुष्ट हुने रहेछ । त्यसपछि पितृ केही हदसम्म सन्तुष्ट हुने रहेछ र सपनामा देखिन छाड्दो रहेछ । समाजमा यस्ता घटना घटिरहन्छन् तर हामी याद गर्दैनौं । पितृले पिर्न (दुःख दिन) थाले भने सधैँ घर-परिवारमा आनन्द, शान्ति नमिल्ने रहेछ । घर-परिवारमा झैझगडा भइरहने रहेछ । एउटा न एउटा रोग लागिरहने रहेछ । पितृ खुशी हुनासाथ स्वतः नै सबै कुरा राम्रो भएर आउने रहेछ ।

पितृलोकमा एक दिनमा एक छाक खान पाउने व्यवस्था हुने रहेछ । त्यहाँको कतिपय कुरा बताउँदा यहाँहरूलाई अचम्म लाग्दछ । कुरा पत्याउन गाह्रो हुन्छ, कल्पनाका कुराजस्तो लाग्न सक्छ । वास्तवमा यो सत्य हो । कुनै पितृलाई हामीले वर्षको एकपटक श्राद्ध (श्रद्धा) गर्‍यौं भने त्यहाँको एकदिन हुनेरहेछ । यसरूपबाट भन्नुपर्दा वर्षदिनको अन्तरमा हामीले श्राद्ध गर्दा त्यहाँ दैनिकरूप नै हुँदै जाँदो रहेछ । कतिपय अवस्थामा यस्तो आपत्तिजनक र अपत्यारिलो हुने रहेछ कि हामीलाई वाहियात (काम नलाग्ने) कुराजस्तो लाग्न सक्छ तर पनि ती कुराहरू लागू भइरहेका हुन्छन् । कुनै-कुनै पितृ मरेको अर्थात् मनुष्य जीवन त्याग गरेको एक वर्ष (वर्ष दिन) वा दुई वर्ष पितृलोकमा बस्नासाथ मनुष्यदेह धारण गर्न पाउने हुँदा रहेछन् र जन्म लिएर आइसकेका हुँदा रहेछन् । त्यहाँ उक्त पितृ त हुँदैन तर उसको छोराले नित्य पानी चढाएको हुन्छ, स्मरण गरिरहेको हुन्छ । तर अचम्मको कुरा के भने छोराले पितृको नाममा पानी चढाउँछ, ठीक त्यसै समयमा पृथ्वीतटमा जन्मिसकेको पितृ (बाबु) चाहिँलाई पानी पिउन मन लाग्छ र पिउँछ । छोराले चढाउने र बाबुले पिउने समय ठ्याक्कै हिसाब गर्दा मिल्न जान्छ ।

मनुष्य जीवन र पितृलोकको जीवनमा केही अन्तर छ, स्थूल र सूक्ष्ममा केही भेद छन् । अर्को कुराचाहिँ पितृलोकको रंग सेतो आवरणभित्र रहेछ त्यसकारण पितृहरू सेतो रंगमा नै रमाउने हुँदा रहछेन् । यस प्रकारको भेदले पनि कोही मान्छे मर्‍यो भने उसको बरखी बार्दा सेतो पहिरनमा रहने चलन बसेको हो । यसो गर्दा पितृहरूलाई धेरै नै सजिलो हुने रहेछ । आफ्ना छोरा, नाति राम्रा हुँदा उनीहरूलाई पनि राम्रो हुने रहेछ । पितृलोकको प्रभावबाट सत्मार्ग गुरुमार्गमा लाग्नलाई धेरै टेवा पुग्ने रहेछ । अर्कोरूपमा भन्नुपर्दा पृथ्वीलोक (मनुष्यलोक) मा रहँदा राम्रो कर्म र नराम्रो कर्म गरेबापत भोग्ने ठाउँ नै पितृलोक रहेछ । भोग्ने भोगाइ सकिएपछि मनुष्य देहमा जन्म लिन पाउने रहेछ ।

कोही पितृ जो माथिल्लो थन्का (तहका) हुन्छन्, पितृलोकबाट मनुष्य देह धारण नगरी देव/देवी लोकमा पनि जान पाउने हुँदा रहेछन् । यस्तो हुनुमा जो आफू मनुष्य छँदा नै देव/देवीलाई प्राप्त गर्ने र केही सिद्धि, शक्ति प्राप्त गरिसकेका छन् तिनीहरू मात्र देवलोकमा रूपान्तर हुन सक्दा रहेछन् । सूक्ष्मताको आधारबाट भन्नुपर्दा पितृलोकको माध्यमबाट जुनसुकै लोकमा जानको लागि तालमेल मिलाउन सकिन्छ । पितृलोकको बारेमा वृत्तान्त कुराहरू समेटिएको जुन संकेत प्राप्त भयो वास्तवमा त्यो नै मेरो लागि ठूलो सौभाग्य थियो, जसको कारण मैले यत्तिका ज्ञान हासिल गर्ने मौका पाएँ । प्रत्येक पितृको अलग-अलग रंग भएता पनि बाहिरी आवरणमा सेतो रंग नै प्रमुख रहेछ ।

म जब माथि जाँदै थिएँ अचम्मको ठाउँ आइपुग्यो । अत्यन्त मनमोहक ठाउँ रहेछ । सुविधाले भरपूर क्षेत्र थियो । रमणीय बगैँचाहरू थिए । तर त्यहाँ जान नै नमिल्ने रहेछ । हेरेर आनन्द लिने रहेछ । फूलहरू (वनस्पति) यति धेरै रङ्गका थिए कि कतिपय रंग पृथ्वीतटमा पाइँदैनन् । पितृहरूले बगैँचाको तर्फबाट पनि आफूलाई शक्तिसम्पन्न बनाउँदा रहेछन् । कतिपय रंगका फूलहरूले यति धेरै शक्ति प्रदान गर्दा रहेछन् जुन हजारौं वर्षको तपस्याबाट पनि त्यति शक्ति प्राप्त गर्न सकिँदैन । जति माथिल्लो तहका पितृ भए, त्यस्ता प्रकारका शक्ति आर्जन गर्ने माध्यम हुँदोरहेछ । तर तल-तलका पितृहरूको लागि यस्तो अवसर दुर्लभ नै हुने रहेछ । पितृहरूले चाहँदैमा यस्तो दुर्लभ एवम् दिव्य फूल (वनस्पति) को दर्शन गर्न नपाइने रहेछ । आफूखुशी कसैले केही गर्न नपाइने रहेछ । प्रत्येक ठाउँमा नियम पूरा गरेर मात्र त्यस क्षेत्रमा प्रवेश गर्न पाउँदा रहेछन् । प्रत्येक ठाउँमा नियमको पालना पूर्णरूपले गर्नुपर्ने हुँदो रहेछ ।

तर मलाई अचम्म लागिरहेको छ कि यस्तो दिव्य ठाउँको दर्शन गर्ने, ज्ञान हासिल गर्ने दिव्य अवसर मैले सजिलै पाइरहेको छु । शायद गुरुकृपा होला । कहिलेकाहीँ यस्तो लाग्छ कि मैले

केही गरेकै छैन । तपस्या पनि गरेकै छैन जस्तो लाग्छ तर पनि मलाई किन यतिविघ्न (धेरै) अवसर प्राप्त भएका छन् । म तुच्छ प्राणीको लागि परमपूज्य गुरुदेवले यति कृपा गर्नुभएको छ। मलाई असङ्ख्य गुरु ऋण लागेको छ । मैले कसरी गुरु ऋण चुक्ता गर्ने होला भन्ने भावले आत्मामा पनि डाह र छट्पटी हुन्छ । कहिलेकाहीं असीम गुरुकृपा बर्सिएको कारण आत्मशरीर हर्षको पराकाष्ठामा पुग्दोरहेछ । त्यतिबेला आत्मा अखण्डरूपबाट रुने रहेछ । गुरुको याद गर्नासाथ रुने रहेछ । यस्तो अवस्थामा पुगेको आत्माले सम्पूर्ण कुरा बिर्सेर केवल गुरुलाई मात्र सम्झने रहेछ । केवल गुरु मात्र देख्ने रहेछ । सम्पूर्ण देवदेवीहरू गुरुभित्रबाट प्राप्त गर्दोरहेछ । पितृलोकमा आएर यो तहमा आएपछि मैले गुरुकृपाको बारेमा थाहा पाउने मौका पाएँ । हामीले खासैरूपमा केही नगर्दा पनि गुरुले कति हेरिरहनुभएको रहेछ भन्ने कुरा चाल पाएँ । गुरुदेवको कति उच्च सम्मान गर्दा रहेछन् पितृलोकमा । त्यो पनि उहाँको दिव्य दर्शनको लागि होइन । जाबो मजस्तो तुच्छ प्राणी जसले केही गरेको छैन, न त तपोधनी नै हुँ । केवल गुरुबाट दीक्षा लिएर उहाँको शिष्य मात्र बन्न पाएको हुँ । योग्य शिष्यको कुरै छाडौं गुरुदेवको शिष्य (तुच्छ) लाई त यति धेरै सम्मान छ भने ... ।

उहाँको चरणको दर्शनको लागि त सम्पूर्ण पितृलोक नै झुक्न तयार छ जस्तो लाग्यो । जस्तोसुकै सम्मान दिन पनि पितृलोक तयार छ जस्तो लाग्यो । मलाई कता-कता खल्लो महसुस भइरहेको छ । यस्ता व्यक्त गर्न नसकिने परम महाशक्तिस्वरूप, परम तेजस्वी, ब्रह्माण्डरूपी महान् व्यक्तित्व पृथ्वीतटमा पुग्दा पृथ्वीबासीको तर्फबाट खासै महत्त्व दिइएन, सम्मान गरिएन । साह्रै अपहेलना गरेजस्तो लाग्यो मलाई । हुन त कसैले सम्मान गरोस् भनेर गुरुदेव जानुभएको होइन तर पनि हामी शिष्य भनाउँदाहरूले पनि केही गर्न सकेनौं । मलाई आत्मग्लानि भइरहेको छ । बेचैनी भइरहेको छ । एउटा न एउटा निहुँ र बहानाले प्रत्येक शिष्य भागिरहेका छन्, कुदिरहेका छन् । ब्रह्माण्डमा प्रत्येक घटना गुरुको इच्छाबेगर घट्दो रहेनछ भन्ने गुरु रहस्य पनि मैले पितृलोकमा नै थाहा पाएँ । यहाँ गुरु प्राप्त गर्नु भनेको त दुर्लभ नै मानिँदो रहेछ । सद्गुरुको सान्निध्यता प्राप्त गर्ने कोही व्यक्तिको पितृलाई पनि यहाँ उच्च सम्मान गरिँदोरहेछ । अरूको त कुरा नै पर सारौं । अब यी कुराहरू यहीं नै छाडौं । मैले अर्को दिव्य अवसर प्राप्त गर्ने मौका पाएँ । मलाई जहाँ पुऱ्याइएको थियो, यस पितृलोकको जुन तह छ, यहाँ मेरो पितृदेव रहनुहुँदो रहेछ । मलाई उहाँको दर्शन एवं भेट वार्ताको लागि मौका प्राप्त भयो । मलाई साह्रै खुशी लाग्यो । त्यस ठाउँमा पुग्नु (जानु) भन्दा अगाडि मैले आत्मिकरूपमा मेरा आराध्य गुरुहरू परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं श्री श्री महायोगी गुरु गोरखनाथलाई स्मरण गरें । उहाँहरूले खुशीसाथ सूक्ष्म अनुमति प्रदान गर्दै भन्नुभयो– 'तँ त्यहाँ गएर त्यत्तिकै फर्किने होइन । तेरो पितृदेवले ऊसँग भएको विद्या तँलाई हस्तान्तरण गर्ने हेतुले यो आयोजना गरिएको छ । अब ऊ यहाँ धेरै रहँदैन । तैंले उक्त विद्या राम्रो जतन गरी राख्नू । समय आएपछि हामी आदेश दिउँला, सोहीअनुसार गर्नू । तेरो पितृदेवलाई हामीले आश्वासन दिएका छौं । गुरु आदेशको अपहेलना नगर्नू ।' म हर्षले भावविभोर भएँ ।

कहिले त्यहाँ पुग्ने होला भनी आत्मामा आकुलता र व्याकुलता प्राप्त हुन आयो । त्यो ठाउँ यति टाढा रहेछ कि त्यहाँ जानको लागि विद्या प्रयोगबेगर सम्भव रहेनछ । मैले त्यही ठाउँमा बसेर पितृदेवलाई तीनपटक सम्झें । सजिलैसँग मैले उहाँ (पितृदेव) सँग आत्मिक सम्पर्क गर्न सफल भएँ । आत्मिक सम्पर्क (कनेक्सन) यति शीघ्र एवं सूक्ष्म रहेछ कि यसको तरङ्ग अत्यन्त चेतनायुक्त एवं दिव्यतम हुने रहेछ । क्षणात् सिद्धि विद्याको सदुपयोगद्वारा म त्यहाँ पुग्ने प्रपञ्च रचियो (योजना तय भयो) । यो यति तीक्ष्ण विद्या हो कि सोच्नासाथ नै तोकेको ठाउँमा पुग्न सकिन्छ । तर त्यसको लागि तप शक्तिचाहिँ निकै नै जम्मा गर्नुपर्ने हुन्छ । जब म त्यहाँ पुगें मेरो पितृदेव जति बेला पनि त्यहीं हुनुहुन्छ होला, गएर प्रथमतः ढोग गर्नेछु (सम्मान गर्नेछु) भन्ने मेरो मनसाय पूरा भएन । उहाँ निश्चित समयमा मात्र त्यहाँ हुनुहुँदो रहेछ । अन्य समयमा उहाँ खै कता हुनुहुन्छ, पत्ता लाग्दो रहेनछ । म आफ्नो खोजाइ र रोजाइको ठाउँमा पुगें जस्तो लाग्यो । यद्यपि उहाँसँग भेट गर्नको लागि मैले केही समय प्रतीक्षा गर्नुपर्ने भयो । म आफ्नै खुशीमा रमाइरहेको थिएँ । त्यहाँ एकछिन बिताएँ होला भन्दा पनि स्थूलतामा धेरै समय बितिसकेको हुने रहेछ ।

अकस्मात् त्यहाँको वातावरणमा एकप्रकारको रौनक (उत्साह) आयो । उहाँ (पितृदेव) आउने कुरा मलाई स्वतः ज्ञात हुन आयो । उहाँ स्वयं म भएतिर आइरहनुभएको थियो । म लम्पसार परेर ढोग्न लागेको थिए । उहाँले अस्वीकार गर्दै भन्नुभयो, 'तिम्रो शिरमा गुरुहरू विराजमान हुनुहुन्छ । तिमीले भावमा आएर मेरो चरणमा ढोग्दा गुरुहरूलाई अपहेलना गरेको जस्तो हुन जान्छ । त्यसकारण आत्मिकरूपमा नमन गर्नू ।' म अवाक् भएँ किनकि मेरो पितृदेवको कृपा, आशीर्वादले गर्दा यस्ता महानतम गुरुसमक्ष पुग्ने मौका पाएँ, जोडिने मौका पाएँ । आज यस क्षणमा बल्ल-बल्ल उहाँलाई पाउँदा पनि ढोग गर्न नपाउँदा बडो नमज्जा (खल्लो) लाग्यो । मैले मेरा आराध्य गुरुहरूसँग पुनः प्रार्थना गरें र ढोग्नको लागि अनुमति मागें । परमपूज्य गुरुदेवले पितृदेवको घुँडामा ढोग्न पाउने अनुमति दिनुभयो, म हर्षले गद्गद् भएँ । यो प्रथमपटक हो गुरुदेवले मेरो इच्छालाई सदर गरिदिनु भएको । उहाँ कति शिष्यवत्सल हुनुहुँदो रहेछ भन्ने कुरा मैले यस क्षणमा अनुभव गर्न पाएँ । परमपूज्य गुरुदेवको आदेश पाएपछि मैले पितृदेवसमक्ष पुगी ढोग गरें, मलाई आनन्द आइरहेको थियो । उहाँले मलाई आशीर्वाद सहित धाप मार्दै भन्नुभयो 'मसँग भएका विद्या अब तिमीले नै चलाउनू तर यति

वर्षको भएपछि मात्र ।' यहाँ म उक्त वर्ष खुलाउन असमर्थ छु किनकि सूक्ष्म शरीरको समय र स्थूल शरीरको समयमा हिसाब गर्दा कहिलेकाहीं ठ्याक्कै भन्न नसकिने अवस्था हुँदो रहेछ । त्यसपछि हामी (म र पितृदेव) अर्के कक्ष (कोठाजस्तो) मा गयौं । त्यो कोठा अचम्मलाग्दो थियो । केही पनि थिएन तर त्यहाँ सम्पूर्ण चीजबीजले भरिभराउ भएकोजस्तो आभास हुन्थ्यो । त्यहाँ हामी दुईजना मात्र थियौं । तर त्यहाँ कैयौं अन्य व्यक्तित्वहरू पनि हुनुहुन्छ भन्ने आभास भयो मलाई ।

मलाई एक क्षण ध्यान गर्नको लागि पितृदेवले निर्देश गर्नुभयो । म ध्यानमग्न भएँ । अचम्मको कुरा के भने उक्त एक क्षणको ध्यानमा मैले यति धेरै कुरा सिक्ने र बुझ्ने मौका पाएँ कि त्यसबारेमा भन्ने हो भने, लेख्दै जाने हो भने स्थूलतामा महिनौं दिन लाग्छ होला । कारण के भने त्यहाँको एक क्षणमा स्थूलताको धेरै समय नै बितिसकेको हुने रहेछ । कुनै विषयवस्तु यस्ता थिए कि त्यहाँ एक झलक (एकपल्ट) मात्र हेरेको हो तर त्यसबाट उब्जिएका कैयौं प्रश्नहरू एवं प्रत्येक प्रश्नको भित्रबाट उब्जिएका (जन्मेका) जिज्ञासा अनि त्यसका समाधानका पक्षहरू, साथै प्रत्येक विषयवस्तुले जीव एवं जगत्मा पार्ने प्रभावहरू, त्यसैगरी भविष्यमा जन्मन सक्ने सम्भावनाहरू एवं चुनौतीहरू, यी सम्पूर्णको ज्ञान एकैसाथ प्राप्त हुने रहेछ । जसरी कुनै संयन्त्रले प्रकृतिका दृश्यहरू एकसाथ प्राप्त गरेर संप्रेषण गर्दछ, ठीक त्यसभन्दा पनि अगाडि रहेर आत्मशरीरले मौका पाउनासाथ हतारका साथ सम्पूर्ण विद्या एवं ज्ञान एकसाथ प्राप्त गर्न खोज्दो रहेछ । तर त्यहाँ आत्माको क्षमताको आधारमा धेरै र थोरै प्राप्त गर्ने रहेछ । शक्तिशाली आत्माले एक क्षणमा पनि धेरै विद्या एवं ज्ञान प्राप्त गर्न सक्षम हुँदोरहेछ । त्यसैगरी कम शक्तिशाली आत्माले अलि कम विद्या एवं ज्ञान हासिल गर्ने रहेछ । आत्मामा छिपेर रहेको संस्कारदोष, घमण्ड, अहंकार, आदिले विद्या प्राप्तिमा साह्रै नै असर पार्ने रहेछ । त्यसैले, आत्म शरीरले आफ्नो स्थूल शरीरलाई सदैव भाव दिएर संगत शुद्धि प्रदान गरेर सत्चिन्तन गराएर आत्मिक ऊर्जालाई वृद्धि गराउने रहेछ । आत्माले आफ्नो उद्देश्य, लक्ष्य पूरा गराउन शरीर धारण गर्ने रहेछ । यसरी शरीर धारण गर्ने क्रममा कहिले मनुष्य शरीर, कहिले देव शरीर आदि आदि प्राप्त गरी अगाडि बढ्ने रहेछ ।

आत्मशरीरले अनेकौं कला, उपकला जानेको रहेछ । जहाँ जुन कुराको आवश्यकता पर्दछ त्यहीअनुसार अगाडि बढ्ने रहेछ । मलाई अचम्म लागिरहेको छ यस विशाल ब्रह्माण्डभित्र ज्ञानका भण्डार कति रहेछन् भनेर । कहिलेकाहीं त सिकेर नै सकिंदैन कि जस्तो लाग्दछ । आत्मशरीरले त्यस कोठा (पितृदेवले लगेर बसाउनुभएको कोठा) मा एक क्षण ध्यानमग्न हुनासाथ नै मैले प्राप्त गरेका उपलब्धिहरूमध्ये एउटा विषय म यहाँ प्रष्ट्याउन गइरहेको छु । जब म ध्यानमा गएँ म स्वयं नै त्यहाँबाट उडेर कतै गइरहेको जस्तो लाग्यो । म जस्तो हुन्छ त्यसलाई नै पिछा गर्दै गएँ । जाँदाजाँदा प्याजी रंगको प्रकाश देखा पर्न थाल्यो ।

त्यसपछि अनेकौं खालका दृश्यहरू देखा पर्न थाले । यी विविध प्रक्रिया हुँदै थिए, मेरो आत्मशरीरलाई पितृदेवले स्पर्श गर्नुभएको जस्तो अनुभव भयो । त्यसपछि मलाई अप्रत्याशितरूपमा करेन्टको झट्का महसुस भयो । म तानिँदै गएँ । उहाँ जानुभएको दिशातर्फ एकसाथ सँगसँगै जान म समर्थ भएँ । मलाई अचम्मको आनन्द प्राप्त भइरहेको थियो । मभित्रबाट यति धेरै श्रद्धाभाव वृद्धि भएर आयो कि जसको बारेमा म यहाँ व्याख्या गर्न असमर्थ छु । जाँदा-जाँदा एउटा सूर्यजस्तो चम्किलो एवं प्रकाशले भरपूर चक्र देखापऱ्यो । उक्त चक्रभित्र हामी (पितृदेव र म) सजिलै छिर्न (प्रवेश गर्न) सफल भयौं । त्यसपछि त यस्तो रमणीय संसार आइपुग्यो कि त्यहाँको बारेमा कसरी व्याख्या गरूँ म । तर पनि म सम्भव भएसम्म उल्लेख गर्नेछु । यी व्याख्याहरूलाई केवल कल्पनाको दृष्टिबाटचाहिँ नहेरियोस्, नबुझियोस्; केवल आत्माको अनुभवको रूपमा बुझियोस् भन्ने चाहन्छु । खुल्ला आकाश गंगामा स्वतः नै विभिन्न खालका ध्वनि गुञ्जित थिए । विभिन्न खालका सङ्केतहरू स्वतः नै विचरण गरिरहेका थिए । जसरी नवग्रह र नक्षत्रहरूले परिक्रमा गर्दछन् त्यसैगरी ती दिव्य सङ्केतहरू आ-आफ्नै चरणमा विचरण गरिरहेका थिए । मात्र दर्शनले पनि असङ्ख्य शक्ति प्राप्त भइरहेको जस्तो लाग्यो । त्यो कुन लोक होला जहाँ हामी आइपुगेका छौं भन्ने विषयले मलाई कौतुहल जागेर आयो र श्रद्धापूर्वक पितृदेवसँग मैले क्षमा माग्दै आफ्नो जिज्ञासा प्रकट गरें । त्यसपछि उहाँ खुशी हुँदै मलाई उक्त नयाँ ठाउँको बारेमा व्याख्या गर्न लाग्नुभयो । 'यो ठाउँ वास्तवमा देवलोक नै हो, कुनै समयमा विशेष कारणले देवलोकबाट अलि पृथक् राखियो र यस ठाउँलाई पितृलोकका विशेष (महान्) आत्माहरूलाई केवल तपस्यामा लीन हुन (डुब्न) को लागि छुट्याइयो । जब पितृहरू देवलोकमा प्रवेश गर्नको लागि क्षमतावान् बन्दछन् त्यसपछि यस लोक (पितृ+देव=पितृदेव) बाट पितृलाई देवलोक पठाइँदो रहेछ र तिनीहरू (पितृहरू) देवलोक प्रवेश गर्दारहेछन् । देवलोक प्राप्तिपश्चात् पितृहरू त्यतैतिर रहँदा रहेछन् र देवलोकको भोग गर्दा रहेछन् ।'.... जय गुरुदेव !

**हामीले कहिले पनि खोतल्ने चेष्टा गरेनौं । के कारणले मान्छेहरू आत्महत्या गर्छन् ? के कारण घरमा अशान्ति हुन्छ, मनमा डाह छटपटी हुन्छ ? यी सम्पूर्णको पछाडि केही न केही कारण अवश्य हुन्छ । धेरै-थोरै अन्य कारण पनि हुन सक्छन् तर अधिकांशत मनुष्य जीवन सफल र असफल हुनुमा पितृलोकको कारण नै हुने रहेछ । त्यसैले शास्त्रमा 'पितृदेवो भव' भनिएको रहेछ ।**

# यसरी बोलाइन्छ पितृ

समाजमा देवीदेवताको अस्तित्व छ कि छैन, भूत प्रेतको अस्तित्व छ कि छैन, पितृहरूको अस्तित्व हुन्छ कि हुँदैन, सूक्ष्म सत्ताको अस्तित्वलाई मान्ने कि नमान्ने भन्नेजस्ता प्रश्नहरू उठिरहेको पाइन्छ। यस घोर भौतिकवादी समाजमा मानिसहरूले यस्ता कुराहरूलाई हल्लाको रूपमा लिने गरेको पाइन्छ । मरेपछि कहाँ पुगिन्छ भन्ने कसलाई के थाहा ? मरेर को फर्केर आएको छ र ? भन्ने प्रश्नहरू उठिरहने हुनाले पनि सूक्ष्म सत्ताप्रतिको मानिसहरूको धारणा नकारात्मक बन्न गएको महसुस हुन्छ। यसरी पितृ, सूक्ष्मता, देवीदेवताहरूलाई नमान्ने एउटा पक्ष समाजमा देखिन्छ । भूत, प्रेत, पितृ, देवीदेवताहरू हुँदैनन् भन्ने मानिसहरूको धारणालाई सूक्ष्म सत्ताको अस्तित्व स्वीकार गर्नेहरू भने असत्य र गलत धारणा ठान्दछन् । त्यसैले समाजमा सूक्ष्म सत्ताको अस्तित्वलाई मान्ने र नमान्नेहरूका बीच अघोषित वैचारिक युद्ध चलिरहेको महसुस हुन्छ। तर समाजमा अर्को एउटा तप्का पनि छ जो बिहान उठ्दादेखि राति नसुत्दासम्म मात्र होइन, सपनामा पनि आफ्ना सम्पूर्ण क्रियाकलाप, सोचाइ तथा व्यवहारहरू यिनै सूक्ष्म सत्ता आत्मा, परमात्मा, देवीदेवता र पितृहरूको वरिपरि घुमिरहेको हुन्छ। प्रार्थना, स्तोत्र पाठ, मन्त्र जप, हवन, ध्यान, पूजनबाट यी तप्काले सधैं सूक्ष्म सत्ताको सहायता र आशीर्वाद खोजिरहेका हुन्छन्। साक्षात्‌रूपमा पितृ, देवीदेवताहरू आएर आशीर्वाद दिनुहुन्छ भन्छन् उनीहरू। जीवनमा आश्चर्यजनक परिवर्तन ल्याउन, रूपान्तरित हुन र आफू सबल भई अन्यलाई सहायता, सहयोग गर्न सक्ने बन्न प्रार्थना, स्तोत्रपाठ, ध्यान, जप प्रमुख सहायक रहेको गर्व यी तप्काका मानिसहरूमा पाइन्छ। यही तप्काले गर्दा आजको यस घोर कलिकालमा पनि मानिसहरूलाई सूक्ष्म सत्तातिर डोऱ्याउन ऊर्जा मिलिरहेको कुरामा मानिसहरू विश्वस्त छन्। यही तप्काकै कारणले गर्दा आज मानिसहरूमा भगवान्‌प्रतिको श्रद्धा, विश्वास जगाउन सकिएको र जन्म दिएर ठूलो गुन लाउने पितृदेवहरूप्रति हामी नतमस्तक बन्न सकेको विश्वास मानिसहरूमा पाइन्छ ।

मरेका मानिसहरूका आत्मालाई बोलाउँदाखेरि 'आउँछ रे' भन्ने सुनिन्छ। 'मरेपछि डुमै राजा' भन्नेहरूका लागि यो कुरा त्यत्ति नै अपत्यारिलो होला जति सियोको प्वालबाट हात्ती छिऱ्यो रे भन्ने सुनेर हुन्छ। पितृलाई बोलाउन सकिन्छ वा सकिँदैन भन्ने सम्बन्धमा सत्यतथ्य बुझ्न हाम्रा केही प्रतिनिधिहरू केही दिनअघि कास्कीको सुन्दर शहर पोखरा हुइँकिएका थिए ।

आत्मा बोलाउने शहर भनेर पनि चिनिन थालेको पोखराको कालिकास्थान, मादीबँसी-९ बस्नुहुने शीतल हमालले हाम्रा प्रतिनिधिहरूलाई पितृ बोलाएर देखाउनुभयो। उहाँले पितृहरूको सम्मानमा चामल, फलफूल, दक्षिणा राखेर पितृ बोलाएर कुराकानी गरेरै देखाउनुभयो । पितृहरूसँग कुराकानी गरेको, विभिन्न प्रश्नहरूको उत्तर पितृहरूले दिनुभएको देख्दा, सुन्दाको क्षण भने अति नै आश्चर्यलाग्दो हुने हाम्रा प्रतिनिधिहरूलाई महसुस भएको थियो । पितृहरूले नेपालीमै जवाफ दिने गर्नुभए पनि कुनै-कुनै पितृले उहाँहरूकै भाषामा जवाफ दिनुभएको थियो जुन बुझ्न नसकिने थियो। घरायसी समस्या समाधानका उपाय, सामाजिक समस्यालगायत पितृहरूको उद्धारका लागि पनि उहाँहरूलाई प्रश्न सोध्न सकिने रहेछ । आफ्नै शरीरमा आफ्ना पितृहरू आएर बोल्नुहुँदा लाग्ने अनुभूति अनौठो हुने कुरा त्यहाँ पितृ चढेको व्यक्तिले भन्नुभएको थियो । पितृ चढेको व्यक्तिलाई पितृ बोलाउनेले मात्र होइन अरूले पनि प्रश्न गर्न सकिने रहेछ । हाम्रा प्रतिनिधिहरूले पनि यस अवसरलाई गुमाउनुभएन र केही प्रश्नहरू राख्नुभयो तर त्यसको उत्तर नबुझिने भाषामा प्राप्त भयो । तर आफन्तहरूले तपाईंहरूको नाममा चढाएका सामग्रीहरू तपाईंहरूले कसरी प्राप्त गर्नुहुन्छ ? भन्ने प्रश्नको पितृको नबुझिने उत्तरलाई शीतलज्यूले नै नेपालीमा अनुवाद गरेर सुनाउनुभएको थियो । उहाँले अन्य पितृहरूले दिनुभएका अन्य उत्तरहरूलाई पनि नेपालीमा उल्था गरेर सुनाउनुभएको थियो । तर पिण्ड, पुनर्जन्मजस्ता कतिपय प्रश्नको उत्तर भने पितृले नेपालीमा नै दिनुभएको थियो ।

पितृपक्षको बेलामा पितृ बोलाउन शीतल हमालकहाँ धेरै मानिसहरूको घुइँचो लाग्ने गरे पनि अन्य दिनमा पनि आफ्ना पितृ बोलाउन लगाएर कुरा गर्न मानिसहरू आउने कुरा हमालज्यूले हाम्रा प्रतिनिधिहरूलाई जानकारी दिनुभयो ।

खोजे नपाइने र हिंडे नपुगिने ठाउँ हुँदैन भनेजस्तै पोखरा पुगेर यत्रतत्र खोजी पस्दा आठ वर्षको उमेरदेखि नै दैवीशक्ति चढेको बताउनुहुने उमादेवी कोइरालासँग पनि भेट भयो। उहाँले भन्नुभएको थियो– 'हालसम्म मैले थुप्रै पितृहरू बोलाइसकेकी छु।' उहाँको विचारमा पितृ एउटा आत्मा हो र त्यस आत्मालाई जसले पनि बोलाउन सक्दछन् । तर यसका लागि व्यक्तिले खानपान, विचार, भावनादेखि लिएर सबै कुरामा शुद्ध, पवित्र, चोखोनितो भई साधनामा लाग्नुपर्दछ ।

मानिस मरे पनि आत्मा अमर रहन्छ भन्ने शास्त्रीय मान्यता रहेको छ । शास्त्रका अनुसार आत्माले चौरासी लाख योनिमध्ये जुनमा पनि जन्म लिन सक्दछन् । कोइरालाज्यूले यस सम्बन्धमा बताउनुभएको थियो– यदि कुनै आत्मा सर्प भएर जन्मेको छ भने यस्तो अवस्थामा उसका आफ्ना मान्छेले पितृ बोलाउन आउनुभयो र त्यस क्रममा उनलाई बोलाइयो भने त्यस आत्माले 'म अहिले सर्प भएको छु' भन्दछन् । यदि चरा भएर जन्मेको भए 'चरा भएको छु' भन्दछन् । एवं प्रकारले यदि कुनै ठाउँमा मान्छे भएर जन्मेको भए 'मैले फलानो मितिमा फलानो ठाउँमा जन्म लिएको छु' भन्दछन् । उहाँले भन्नुभयो– एक वर्षको मात्र होइन, हजारौँहजार वर्षअगाडिका पितृहरूलाई पनि बोलाउन सकिन्छ ।

पोखराको बगाले टोलकी भुवनेश्वरी श्रेष्ठले विगत केही वर्ष अगाडिदेखि नै पितृ बोलाउने कार्य गर्दै आउनुभएको हो । उहाँको विचारमा पनि पितृ बोलाउने भनेको आत्मालाई बोलाउने हो । बोलाइएका आत्माहरू सबै सद्गति भएकाहरू मात्र हुन्छन् भन्ने छैन । उहाँका अनुसार कुनै-कुनै आत्माहरू उचित काजक्रिया, संस्कार नपाएर भट्किएका हुन्छन् र यस्ता आत्मालाई 'डुलुवा आत्मा' भनिन्छ । यस्ता आत्माहरूले जो कोहीलाई पनि दुःख दिन सक्दछन् भन्ने उहाँ ठान्नुहुन्छ । मानिसले आफ्नो जीवनमा राम्रो कर्म गरे अर्को जुनिमा पनि मानिस भएर जन्मन सक्दछ तर कर्म खराब, पशुतुल्य भएमा पशु भएर पनि जन्मन सक्दछ भन्ने धारणा उहाँको थियो । उहाँका अनुसार कुनै-कुनै पितृहरूले आफू फलानो ठाउँमा भट्किएको र आफ्नो उद्धारको लागि 'यो गरिदिनू, त्यो गरिदिनू' भनी उपाय पनि बताउने गर्दछन् ।

पितृ चढ्दा अनौठो अनुभव हुने कुरा एकातिर छ भने यसरी चढ्दाको अनुभवको अनुभूति गर्नेहरूको अनुभव सुन्दा पनि सुन्नेलाई पनि अनौठो लाग्ने हुन्छ । आफ्ना दिवंगत बुबा, आमा, हजूरबुबा, हजूरआमा, काका, काकी, मामा, माइज्यू जो कोही पनि माध्यमको शरीरमा आएर सोधिएका कुराहरूको जवाफ दिँदा सबै आश्चर्यमा पर्ने गर्दछन् । पितृलाई बोलाएर उहाँकै भाषामा, उहाँकै शैलीमा, उहाँकै स्वरमा कुराकानी गर्दा सामान्यजन मात्र होइन, यसबाट वैज्ञानिकहरूले समेत अचम्म मान्ने गरेका छन् ।

पितृ चढ्दाको अनुभवबारे श्रेष्ठज्यूले बताउनुभयो– शरीरमा पितृ चढ्दा शुरुमा जुन अवस्थामा त्यस आत्माले शरीर त्याग गरेको हो, त्यही अवस्थाको अनुभवबाट शुरु हुन्छ । जस्तो कि कोही आगोले पोलेर मरेको रहेछ भने त्यही किसिमको अनुभूति शुरुमा हुन्छ । उहाँले अगाडि भन्नुभयो– कुनै आत्माले आफ्नो जीवनकालका अतृप्त इच्छाहरू प्रकट गर्दछन् । जीवनमा कुनै खानेकुराको लत वा

अम्मल बसेको रहेछ भने उसले ती खानेकुरा वा अम्मलहरू आफ्नो नाममा कसैलाई खान देऊ वा चढाइदेऊ भन्दछन् । चुरोटको अम्मल भएको आत्माले 'फलानोलाई मेरो नाममा चुरोट देऊ' भनी भन्ने गर्दछन् ।

भुवनेश्वरीज्यूले पितृ बोलाउने कार्यमा लाग्दा एउटा अनुभव सँगाल्नुभएको रहेछ । उहाँले उक्त अनुभव सुनाउँदै भन्नुभयो– एकजना फुटबल खेलाडी बिरामी परेर अल्पायुमै बितेका रहेछन् । उनको आत्मालाई बोलाउँदा आत्माले 'फुटबल खेलाडीहरूलाई सहयोग गरिदेऊ, फुटबल खेल्ने चौर दान गरिदेऊ' इत्यादि इच्छाहरू प्रकट गरेका थिए ।

विगत १५/१६ वर्षअगाडि मात्रै पोखरामा दैवीशक्ति चढ्ने, पितृ बोलाउने व्यक्तिहरू औंलामा गन्न सकिने संख्यामा थिए । तर आजभोलि टोल टोलमा यस किसिमका दैवीशक्ति उपचार, पितृ बोलाउने, तन्त्र-मन्त्र, ज्योतिष, आखत हेराउने ठाउँहरू जहाँतहीँ देख्न सकिन्छ । यस्ता स्थानहरूमा मानिसहरूको भीड पनि धेरै देखिन्छ । यसबाट मानिसहरूले धेरै फाइदा उठाइरहेका पनि छन् भन्ने स्थानीय मानिसहरूको धारणा रहेको पाइन्छ । आजको वैज्ञानिक युगमा पनि यस्ता क्रियाकलापले एकातिर मानिसहरूलाई लाभ पुऱ्याइरहेको देखिन्छ भने अर्कोतिर विज्ञानको लागि पनि यो चुनौती भएर देखा परेको छ । यस सम्बन्धमा सत्यतथ्य खोज्ने काम विज्ञानको हो ।

जय गुरुदेव !

# पितृ-तृप्ति किन र कसरी ?

पितृहरूका लागि हामीले गर्दै आइरहेका पुण्यतम कार्यहरूमा श्राद्ध पनि पर्दछ । श्राद्धबाट कसरी पितृहरूलाई तृप्त गरेर उहाँहरूको आशीर्वाद, कृपा पाउने भन्ने सम्बन्धमा सबै विज्ञ नभए पनि जानी नजानी हामीले श्राद्ध भने गर्ने गर्दछौँ । श्राद्ध के हो, कसरी गर्ने, यसका अधिकारी को हुन्, श्राद्धबाट हामीलाई के-के फाइदा हुन्छ, पितृहरूलाई श्राद्धबाट के-के प्राप्त हुन्छ भन्ने सम्बन्धमा यहाँ चर्चा गरिएको छ ।

### श्राद्धको परिभाषाः

जुन कर्म पितृहरूलाई तृप्त गराउने उद्देश्यबाट श्रद्धापूर्वक गरिन्छ त्यसलाई श्राद्ध भनिन्छ– '**श्रद्धया पितृन् उद्दिश्य विधिना क्रियते यत्कर्म तत् श्राद्धम् ।**' श्रद्धाबाट नै श्राद्ध शब्दको उत्पत्ति हुन्छ– '**श्रद्धार्थमिदं श्राद्धम्**', '**श्रद्धया कृतं सम्पादितमिदम्**', '**श्रद्धया दीयते यस्मात् तच्छ्राद्धम्**' तथा '**श्रद्धया इदं श्राद्धम्**' । अर्थात् आफ्ना मृत पितृगणको उद्देश्यबाट श्रद्धापूर्वक गरिने कर्मविशेषलाई श्राद्धको नामबाट जानिन्छ । यसलाई नै पितृयज्ञ पनि भनिन्छ जसको वर्णन मनुस्मृति आदि धर्मशास्त्र, पुराणहरू तथा वीरमित्रोदय, श्राद्धकल्पलता, श्राद्धतत्त्व, पितृदयिता आदि अनेक ग्रन्थहरूमा प्राप्त हुन्छ ।

महर्षि पराशरका अनुसार 'देश, काल तथा पात्रमा हविष्यादि विधिद्वारा जुन कर्म तिल, कुश तथा मन्त्रहरूबाट युक्त भएर श्रद्धापूर्वक गरिन्छ, त्यही श्राद्ध हो ।'

महर्षि बृहस्पति तथा श्राद्धतत्त्वमा वर्णित महर्षि पुलत्स्यको वचनानुसार– 'जुन कर्मविशेषमा दूध, घिउ र महयुक्त सुसंस्कृत (राम्रो तरीकाले पकाइएको) उत्तम व्यञ्जनहरूलाई श्रद्धापूर्वक पितृगणको उद्देश्यले ब्राह्मणादिलाई प्रदान गरिन्छ, त्यसलाई श्राद्ध भनिन्छ ।'

यसैप्रकार ब्रह्मपुराणमा पनि श्राद्धको लक्षण लेखिएको छ– 'देश, काल र पात्रमा विधिपूर्वक श्रद्धाबाट पितृहरूको उद्देश्यले ब्राह्मणलाई दान दिइन्छ भने यसलाई श्राद्ध भनिन्छ ।'

### पितृको मात्र नभई श्राद्ध गर्नेको पनि कल्याण

जसले विधिपूर्वक शान्त मनले श्राद्ध गर्दछ, ऊ सबै पापहरूबाट रहित भएर मुक्ति प्राप्त गर्दछ र फेरि संसारचक्रमा आउँदैन ।[१] अतः प्राणीलाई पितृगणको सन्तुष्टि तथा आफ्नो कल्याणको लागि पनि श्राद्ध अवश्यै गर्नुपर्दछ । यस संसारमा श्राद्ध गर्नेहरूका लागि श्राद्धभन्दा कल्याणकारी उपाय छैन । यस तथ्यको पुष्टि महर्षि सुमन्तुद्वारा पनि

### श्राद्धमा दिइएका अन्नादिको प्राप्ति कसरी ?

यो जिज्ञासा स्वाभाविक हो कि श्राद्धमा दिइएका अन्नादि सामग्रीहरू पितृहरूलाई कसरी प्राप्त हुन्छ ? विभिन्न कर्मका अनुसार मृत्युपछि जीवलाई भिन्नभिन्न गति प्राप्त हुन्छ । कोही देवता बन्छन्, कोही पितृ, कोही प्रेत, कोही, हात्ती, कोही कमिला, कोही तृण । श्राद्धमा दिइएका स-साना पिण्डबाट हात्तीको पेट कसरी भरिन्छ । यसैप्रकार कमिलाले यति ठूलो पिण्डलाई कसरी खान सक्ला ? देवताहरू अमृतबाट तृप्त हुन्छन्, पिण्डबाट उनीहरूलाई कसरी तृप्ति मिल्दछ ? यी प्रश्नहरूको शास्त्रले सुस्पष्ट जवाफ दिएको छ कि नाम-गोत्रको सहाराले विश्वेदेव एवं अग्निष्वात्त आदि दिव्य पितृहरूले हव्य-कव्यलाई पितृहरूलाई प्राप्त गराइदिन्छन् । यदि पितालाई देवयोनि प्राप्त भएको छ भने दिइएका अन्नादि अमृतको रूपमा परिवर्तित भएर उहाँलाई त्यहाँ प्राप्त हुन्छ । मनुष्ययोनिमा अन्नरूपमा तथा पशुयोनिमा तृणरूपमा त्यहाँ प्राप्त हुन्छ । नागादि योनिहरूमा वायुरूपमा, यक्षयोनिमा पानरूपमा तथा अन्य योनिहरूमा पनि उसलाई श्राद्धीय वस्तु भोगजनक तृप्तिकर पदार्थहरूको रूपमा प्राप्त भएर अवश्य तृप्त गर्दछ ।[७] जसरी गौशालामा छलिएकी मातालाई बाच्छाले जसरी पनि खोज्दछ, त्यसैप्रकार मन्त्रले तत्तद् वस्तुजातलाई प्राणीसमक्ष कुनै न कुनै प्रकारबाट पुर्‍याइदिन्छ । नाम, गोत्र, हृदयको श्रद्धा एवं उचित संकल्पपूर्वक दिइएका पदार्थहरूलाई भक्तिपूर्वक उच्चरित मन्त्रले ऊसमीप पुर्‍याइदिन्छ । जीवले चाहे सैकडौं योनिलाई पार गरिसकेको भए पनि तृप्ति त उसको समीप पुग्दछ नै ।

भएको छ–

**श्राद्धात् परतरं नान्यच्छ्रेयस्करमुदाहृतम् ।**
**तस्मात् सर्वप्रयत्नेन श्राद्धं कुर्याद्विचक्षणः ॥**

अर्थात् यस जगत्मा श्राद्धभन्दा श्रेष्ठ अन्य कुनै कल्याणप्रद उपाय छैन । अतः बुद्धिमान्ले यत्नपूर्वक श्राद्ध गर्नुपर्दछ ।

यति मात्र कहाँ हो र ? श्राद्धले आफ्ना अनुष्ठाताको आयुलाई बढाउँछ, पुत्र प्रदान गरेर कुल परम्परालाई अक्षुण्ण राख्दछ, धनधान्यको ताँती लगाउँछ, शरीरमा बल-पौरुषको संचार गर्दछ, पुष्टि प्रदान गर्दछ र यशको विस्तार गरेर सबै प्रकारको सुख प्रदान गर्दछ ।[२]

## श्राद्धबाट मुक्ति

यसप्रकार श्राद्धले सांसारिक जीवनलाई सुखमय बनाउँछ, परलोकलाई सुधार्दछ र अन्तमा मुक्ति पनि प्रदान गर्दछ–

**आयुः प्रजां धनं विद्यां स्वर्गं मोक्षं सुखानि च ।**
**प्रयच्छन्ति तथा राज्यं पितरः श्राद्धतर्पिताः ॥**

(मार्कण्डेयपुराण)

अर्थात् श्राद्धबाट सन्तुष्ट भएर पितृगणले श्राद्धकर्तालाई दीर्घ आयु, सन्तति, धन, विद्या, राज्य, सुख, स्वर्ग एवं मोक्ष प्रदान गर्दछन् । अत्रिसंहिताका अनुसार जो पुत्र, भ्राता (भाइ), पौत्र (नाति) अथवा दौहित्र (छोरीको छोरो) आदि पितृकार्य (श्राद्धानुष्ठान) मा संलग्न रहन्छ, उसले निश्चय नै परम गति प्राप्त गर्दछ ।[३] यहाँसम्म पनि भनिएको छ कि जसले श्राद्ध गर्दछ, जसले त्यसको विधि-विधानलाई जान्दछ, जसले श्राद्ध गर्न सल्लाह दिन्छ र जसले श्राद्धको अनुमोदन गर्दछ, यी सबैलाई श्राद्धको पुण्यफल प्राप्त हुन्छ ।

पितृतीर्थ पुष्करमा भगवान् श्रीराम, श्राद्धमा ब्राह्मण भोजन गराउँदै

**देवकार्यादपि सदा पितृकार्यं विशिष्यते ।**
**देवताभ्यो हि पूर्वं पितॄणामाप्यायनं वरम् ॥**

(हेमाद्रिमा वायु तथा ब्रह्मवैवर्तको वचन)

देवकार्यको अपेक्षा पितृकार्यको विशेषता मानिएको छ । अतः देवकार्यभन्दा पहिले पितृहरूलाई तृप्त गर्नुपर्दछ ।

**श्राद्धात् परतरं नान्यच्छ्रेयस्करमुदाहृतम् ।**
**तस्मात् सर्वप्रयत्नेन श्राद्धं कुर्याद् विचक्षणः ॥**

(हेमाद्रिमा सुमन्तुको वचन)

श्राद्धभन्दा ठूलो कल्याणकारी अरू कुनै कर्म छैन, अतः प्रयत्नपूर्वक श्राद्ध गर्दै रहनुपर्दछ ।

**एवं विधानतः श्राद्धं कुर्यात् स्वविभवोचितम् ।**
**आब्रह्मस्तम्बपर्यन्तं जगत् प्रीणाति मानवः ॥**

(ब्रह्मपुराण)

श्राद्धबाट आफू तथा आफ्ना पितृहरू मात्र संतृप्त हुँदैनन्, जो व्यक्तिले विधिपूर्वक गच्छेअनुसार श्राद्ध गर्दछ, उसले ब्रह्मादेखि लिएर तृणसम्म समस्त प्राणीहरूलाई संतृप्त गर्दछ ।

**योऽनेन विधिना श्राद्धं कुर्याद् वै शान्तमानसः ।**
**व्यपेतकल्मषो नित्यं याति नावर्तते पुनः ॥**

(हेमाद्रिमा कूर्मपुराणको वचन)

जसले शान्त मन भएर विधिपूर्वक श्राद्ध गर्दछ ऊ सम्पूर्ण पापबाट मुक्त भएर जन्म-मृत्युको बन्धनबाट छुट्दछ ।

**उपदेष्टानुमन्ता च लोके तुल्यफलौ स्मृतौ ॥**

(बृहस्पति)

## श्राद्ध नगर्नाले हानि

शास्त्रले श्राद्ध नगर्नाले हुने हानिलाई उल्लेख गरेको छ । श्राद्ध तत्त्वबाट परिचित हुनु तथा त्यसको अनुष्ठानका लागि तत्पर हुनु अत्यन्त आवश्यक छ । यो सर्वविदित छ कि मरेको व्यक्तिले महायात्रामा आफ्नो स्थूल शरीरलाई त लान सक्दैन भने पाथेय (अन्न, जल) कसरी लैजान सक्ला ? त्यस बेला उसका नाता-कुटुम्बहरूले श्राद्धविधिबाट उसलाई जे जति दिन्छन्, त्यही उसलाई प्राप्त हुन्छ । शास्त्रले मरणोपरान्त पिण्डदानको व्यवस्था गरेको छ । सर्वप्रथम शवयात्राअन्तर्गत ६ पिण्ड दिइन्छ जसबाट भूमिका अधिष्ठातृ देवताहरूको प्रसन्नता तथा भूत-पिशाचहरूद्वारा हुने बाधा निराकरण

आदि प्रयोजन सिद्ध हुन्छ । यसका साथसाथै दशगात्र (मरेको दश दिनसम्म दिइने दश पिण्डबाट क्रमशः मृतात्माको शरीर बन्दै जाने र दशौँ दिनमा पूर्ण शरीर बन्ने क्रिया) मा दिइने दश पिण्डद्वारा जीवलाई अतिवाहिक (सूक्ष्म शरीर) प्राप्त हुन्छ । यो मृत व्यक्तिको महायात्राको प्रारम्भको कुरा भयो । त्यसपछि उसलाई बाटोको भोजन, अन्न, जलादिको आवश्यकता पर्दछ जुन उत्तमषोडशी (मरेको बाह्रौँ दिनदेखि वर्षदिनभित्र गरिने मासिक श्राद्ध) मा दिइने पिण्डदानबाट उसलाई प्राप्त हुन्छ । यदि नाता-कुटुम्ब, छोरा-नातिले यस्तो पिण्ड दिँदैनन् भने भोकप्यासले उसलाई त्यहाँ असाध्यै दुःख हुन्छ ।[४]

## श्राद्ध नगर्नेलाई कष्ट

श्राद्ध नगर्नेले पलपलमा कष्टको सामना गर्नुपर्दछ । मृत प्राणी बाध्य भएर श्राद्ध नगर्ने आफ्ना नाता-कुटुम्बहरूको रगत चुस्न लाग्दछन्– **श्राद्धं न कुरुते मोहात् तस्य रक्तं पिबन्ति ते ।** (ब्रह्मपुराण) । साथसाथै पितृले यसरी श्राप पनि दिन्छन्–

...**पितरस्तस्य शापं दत्त्वा प्रयान्ति च ।** (नागरखण्ड)

फेरि यस अभिशप्त परिवारले जीवनभरि कष्टैकष्ट झेल्नुपर्ने हुन्छ । त्यस परिवारमा पुत्र उत्पत्ति हुँदैन, कोही पनि निरोगी रहँदैन, कोही पनि लामो आयुसम्म बाँच्दैनन्, कुनै प्रकारको पनि कल्याण प्राप्त हुँदैन र मरेपछि नरक पनि जानुपर्ने हुन्छ ।[५]

## ब्राह्मण-भोजनबाट पनि श्राद्धको पूर्ति

सामान्यतः श्राद्धका दुई प्रक्रिया छन्– १. पिण्डदान र २. ब्राह्मन-भोजन । मृत्युपछि जो देवलोक वा पितृलोकमा पुग्दछन्, उनी मन्त्रद्वारा बोलाइएपछि तत्तत् लोकहरूबाट तत्क्षण श्राद्धस्थलमा आउँछन् र निमन्त्रित ब्राह्मणको माध्यमबाट भोजन गर्दछन् । सूक्ष्मग्राही हुनाले भोजनको सूक्ष्मकणको आघ्राणबाट (बास्ना सुँघेर) उनले भोजन गर्दछन्, उनी तृप्त हुन्छन् । वेदमा बताइएको छ कि ब्राह्मणहरूलाई भोजन गराउनाले त्यो पितृहरूलाई प्राप्त हुन्छ–

**इममोदनं नि दधे ब्राह्मणेषु विष्टारिणं लोकजितं स्वर्गम् ।** (अर्थर्ववेद ४।३४।८)

(इमम् ओदनम्) यस ओदनोपलक्षित भोजन (चामल पकाएर तयार भएको भोजन) लाई (ब्राह्मणेषु नि दधे) ब्राह्मणहरूमा स्थापित गर्दैछु । यो भोजन विस्तारयुक्त छ र स्वर्गलोकलाई जित्ने छ । यस तथ्यलाई स्पष्ट गर्दै मनुले लेखेका छन्–

**यस्यास्येन सदाश्नन्ति हव्यानि त्रिदिवौकसः । कव्यानि चैव पितरः किं भूतमधिकं ततः ॥** (मनुस्मृति १।९५) अर्थात् ब्राह्मणको मुखबाट देवताले हव्य र पितृले कव्यको सेवन गर्दछन् ।

पितृहरूको सम्बन्धमा लेखिएको पाइन्छ कि यिनीहरू आफ्नो कर्मवश अन्तरिक्षमा वायवीय (वायुको) शरीर धारण गरेर रहन्छन् । अन्तरिक्षमा रहने यी पितृहरूलाई 'श्राद्धकाल आइसकेको छ' भन्ने सुनेर मात्रै पनि तृप्ति मिल्दछ । यो 'मनोजव' हुन्छ अर्थात् पितृहरूको गति मनको गतिसमान हुन्छ । यी स्मरणबाट नै श्राद्धस्थलमा आउँछन् र ब्राह्मणका साथ भोजन गरेर तृप्त हुन्छन् । यिनीहरूलाई कसैले पनि नदेख्नाको कारण यिनीहरूको शरीर वायवीय हुनाले हो ।[६]

## धनको अभावमा पनि श्राद्ध

धन सबैसँग नहुन सक्छ । यसको अभावमा श्राद्ध नगर्ने त भन्ने प्रश्न उठ्न सक्छ । तर शास्त्रले धनको अभाव भएको अवस्थाको लागि केही व्यवस्था गरेको छ–

१) यदि अन्न-वस्त्र किन्न पैसा छैन भने त्यस परि स्थितिमा सागपातबाट श्राद्ध गर्नुपर्दछ–

**तस्माच्छ्राद्धं नरो भक्त्या शाकैरपि यथाविधि ।**

२) यदि सागपात किन्ने पैसा पनि छैन भने काठ-पात दाउरा आदि बेचेर पैसा जम्मा गरोस् र त्यस पैसाले सागपात किनेर श्राद्ध गरोस् । अधिक श्रमबाट यो श्राद्ध गरिएको हुनाले यसको फल पनि लाखौँ हुन्छ ।

३) देशविशेष र कालविशेषले दाउरा पनि पाइएन भने यस्तो परिस्थितिमा शास्त्रले बताएको छ कि घाँसबाट श्राद्ध हुन सक्दछ । घाँस काटेर गाईलाई खुवाउने व्यवस्था पद्मपुराणमा पाइन्छ– **एतत् पुण्यप्रसादेन गतोऽसौ सुरमन्दिरम् ।** (पद्मपुराण, सृष्टि० ५२।३१९)

४) घाँस पनि प्राप्त गर्न नसकिने परिस्थितिमा श्राद्धकर्ता एकान्त स्थानमा जाओस् र दुवै भुजालाई उठाएर निम्नलिखित श्लोकबाट पितृहरूलाई प्रार्थना गरोस्–

**न मेऽस्ति वित्तं न धनं च नान्यच्छ्राद्धोपयोग्यं स्वपितृन्नतोऽस्मि ।**

**तृप्यन्तु भक्त्या पितरो मयैतौ कृतौ भुजौ वर्त्मनि मारुतस्य ॥**

(विष्णुपु० ३।१४।३०)

अर्थात्, हे मेरा पितृगण ! मसँग श्राद्धका लागि उपयुक्त न त धन छ, न धान्य । मसँग त हजूरको लागि श्रद्धा र भक्ति छ । म यसैद्वारा हजूरलाई तृप्त गर्न चाहन्छु । हजूर तृप्त हुनुहोस् । मैले (शास्त्रको आदेशानुसार) दुवै भुजालाई आकाशमा उठाइरहेको छु ।

श्राद्धकार्यमा साधनसम्पन्न व्यक्तिले वित्तशाठ्य (कन्जुस्याइँ) गर्नु हुँदैन । आफूसँग भएका साधनहरूबाट विशेष श्रद्धापूर्वक श्राद्ध अवश्य गर्नुपर्दछ ।

यस विषयमा मनुस्मृतिमा भनिएको छ कि श्राद्धमा निमन्त्रित ब्राह्मणमा पितृ गुप्तरूपमा निवास गर्दछन् । प्राणवायुजस्तै ब्राह्मण हिँडेपछि हिँड्छन् र बसेको बेला बस्छन् । श्राद्धकालमा निमन्त्रित ब्राह्मणका साथ नै प्राणरूपमा वा वायुरूपमा पितृ आउँछन् र ब्राह्मणहरूका साथ बसेर भोजन गर्दछन् । मृत्युपछि पितृ सूक्ष्म शरीरधारी हुन्छन् । यसैले उनलाई कसैले देख्दैनन् । शतपथ ब्राह्मणमा पनि भनिएको छ– **'तिर इव वै पितरो मनुष्येभ्यः'** (२।३।४।२१) अर्थात् सूक्ष्म शरीरधारी हुनाको कारण पितृ मनुष्यबाट लुकेका हुन्छन् । अतः सूक्ष्म शरीरधारी हुनाले पितृ जल, अग्नि र वायुप्रधान हुन्छन्, त्यसैले लोकलोकान्तरमा आउन, जान रोकावट हुँदैन ।

### श्राद्धका अधिकारी

पिताको श्राद्ध गर्ने अधिकार मुख्यरूपमा छोरालाई हुन्छ । धेरै छोरा भएमा अन्त्येष्टिदेखि लिएर एकादशाह तथा द्वादशाहसम्म सबै क्रियाहरू जेठो छोराले गर्नुपर्दछ । विशेष परिस्थितिमा ठूलो दाजुको आज्ञा लिएर भाइले पनि गर्न सक्दछन् । यदि सबै दाजुभाइको संयुक्त परिवार हो भने वार्षिक श्राद्ध पनि जेठो छोराद्वारा एकै ठाउँमा सम्पन्न हुन सक्दछ । यदि छोराहरू अलग-अलग छन् भने उनीहरूले वार्षिक श्राद्ध अलग-अलग नै गर्नुपर्दछ ।

यदि छोरा छैनन् भने शास्त्रमा श्राद्धाधिकारीका लागि विभिन्न व्यवस्था गरिएको पाइन्छ । स्मृतिसंग्रह तथा श्राद्धकल्पलताअनुसार श्राद्धका अधिकारी छोरा, नाति, दौहित्र (छोरीका छोरा), पत्नी, भाइ, भतिजा, पिता, माता, बुहारी, बहिनी, भाञ्जा, सपिण्ड (स्वयंदेखि लिएर पूर्वका सात पिँढीसम्मका परिवार) तथा सोदक (आठौँदेखि लिएर चौधौँ पिँढीसम्मका पूर्वज परिवार) हुन्छन् । यिनमा पहिले-पहिलेका नरहेपछि क्रमशः पछिकालाई श्राद्ध गर्ने अधिकार हुन्छ । विष्णुपुराणअनुसार छोरा, नाति, पनाति, भाइ, भतिजा अथवा आफ्ना सपिण्ड सन्ततिमा उत्पन्न भएको पुरुष नै श्राद्धादि क्रिया गर्ने अधिकारी हुन्छ । यदि यी सबैको अभाव हुन्छ भने सोदकका सन्तति अथवा मातृपक्षका सपिण्ड अथवा सोदकलाई यसको अधिकार हुन्छ । मातृकुल र पितृकुल दुवै नष्ट भएमा स्त्रीले नै यस क्रियालाई गरोस् अथवा यदि स्त्री पनि छैनन् भने कुनै साथीबाट नै गरोस् वा बान्धवहीन मृतकको धनबाट नै राजाले नै उसको सम्पूर्ण प्रेतकर्म गराओस् ।

मार्कण्डेयपुराणमा बताइएको छ कि राज्यप्रमुख सबै वर्णका बन्धु हुन् । अतः सबै श्राद्धाधिकारीजनको अभावमा उनले मृत व्यक्तिको धनबाट उसको जातिका बान्धवहरूद्वारा

राम्रोसँग दाह आदि सबै और्ध्वदैहिक क्रिया गराऊन् ।

*१. योऽनेन विधिना श्राद्धं कुर्याद् वै शान्तमानसः । व्यपेतकल्मषो नित्यं याति नावर्तते पुनः॥ (कूर्मपुराण)*

*२. आयुः पुत्रान् यशः स्वर्गं कीर्तिं पुष्टिं बलं श्रियम् । पशून् सौख्यं धनं धान्यं प्राप्नुयात् पितृपूजनात् ॥*

*(यमस्मृति, गरुडपुराण, श्राद्धप्रकाश)*

*३. पुत्रो वा भ्रातरो वापि दौहित्रः पौत्रकस्तथा । पितृकार्ये प्रसक्ता ये ते परमां गतिम् ॥*

*४. लोकान्तरेषु ये तोयं लभन्ते नान्नमेव च । दत्तं न वंशजैर्येषां ते व्यथां यान्ति दारुणाम् ॥ (सुमन्तु)*

*५. (क) न तत्र वीरा जायन्ते नारोग्यं न शतायुषः। न च श्रेयोऽधिगच्छन्ति यत्र श्राद्धं विवर्जितम् ॥ (हारीतस्मृति)*

*(ख) 'श्राद्धमेतन्न कुर्वाणो नरकं प्रतिपद्यते ॥' (विष्णुस्मृति)*

*६. तस्य ते पितरः श्रुत्वा श्राद्धकालमुपस्थितम् । अन्योन्यं मनसा ध्यात्वा सम्पतन्ति मनोजवाः ॥ ब्राह्मणैस्ते सहाश्नन्ति पितरो ह्यन्तरिक्षगाः । वायुभूतास्तु तिष्ठन्ति भुक्त्वा यान्ति परां गतिम् ॥ (कूर्मपुराण उ०वि० २२।३-४)*

*७. नाममन्त्रास्तथा देशा भवान्तरगतानपि । प्राणिनः प्रीणयन्त्येते तदाहारत्वमागतान् । देवो यदि पिता जातः शुभकर्मानुयोगतः । तस्यान्नममृतं भूत्वा देवत्वेऽप्यनुगच्छति ॥ मर्त्यत्वे ह्यन्नरूपेण पशुत्वे च तृणं भवेत् । श्राद्धान्नं वायुरूपेण नागत्वेऽप्युपतिष्ठति ॥ पानं भवति यक्षत्वे नानाभोगकरं तथा ।(मार्कण्डेयपुराण, वायुपुराण, श्राद्धकल्पलता)*

जय गुरुदेव !

# पितृ स्तोत्र

अर्चितानाममूर्त्तानां पितृणां दीप्ततेजसाम् । नमस्यामि सदा तेषां ध्यानिनां दिव्यचक्षुषाम् ।।
इन्द्रादीनां च नेतारो दक्षमारीचयोस्तथा । सप्तर्षीणां तथान्येषां तान् नमस्यामि कामदान् ।।
मन्वादीनां मुनीन्द्राणां सूर्याचन्द्रमसोस्तथा । तान् नमस्याम्यहं सर्वान् पितृनप्सूदधावपि ।।
नक्षत्राणां ग्रहाणां च वाय्वग्न्योर्नभसस्तथा । द्यावापृथिव्योश्च तथा नमस्यामि कृताञ्जलिः ।।
देवर्षीणां जनितृंश्च सर्वलोकनमस्कृतान् । अक्षय्यस्य सदा दातृन् नमस्येऽहं कृताञ्जलिः ।।
प्रजापतेः कश्यपाय सोमाय वरुणाय च । योगेश्वरेभ्यश्च सदा नमस्यामि कृताञ्जलिः ।।
नमो गणेभ्यः सप्तभ्यस्तथा लोकेषु सप्तषु । स्वयम्भुवे नमस्यामि ब्रह्मणे योगचक्षुसे ।।
सोमाधारान् पितृगणान् योगमूर्त्तिधरांस्तथा । नमस्यामि तथा सामं पितरं जगतामहम् ।।
अग्निरूपांस्तथैवान्यान् नमस्यामि पितृनहम् । अग्नीषोममयं विश्वं यत एतदशेषतः ।।
ये तु तेजसि ये चैते सोमसूर्याग्निमूर्तयः । जगत्स्वरूपिणश्चैव तथा ब्रह्मस्वरूपिणः ।।
तेभ्योऽखिलेभ्यो योगिभ्यः पितृभ्यो यतमानसः । नमो नमो नमस्ते मे प्रसीदन्तु स्वधाभुजः ।।

जो सबैद्वारा पूजित, अमूर्त, अत्यन्त तेजस्वी, ध्यानी तथा दृष्टिसम्पन्न हुनुहुन्छ, यस्ता पितृहरुलाई म सदा नमस्कार गर्दछु । जो इन्द्र आदि देवताहरु, दक्ष, मारीच, सप्तर्षिहरु तथा अरूका पनि नेता हुनुहुन्छ, कामनाको पूर्ति गर्ने यस्ता पितृहरुलाई म प्रणाम गर्दछु । जो मनु आदि राजर्षिहरु, मुनीश्वरहरु तथा सूर्य र चन्द्रमाको पनि नायक हुनुहुन्छ, यस्ता समस्त पितृहरुलाई म जल र समुद्रमा पनि नमस्कार गर्दछु । नक्षत्रहरु, ग्रहहरु, वायु, अग्नि, आकाश र द्युलोक तथा पृथ्वीका पनि जो नेता हुनुहुन्छ, यस्ता पितृहरुलाई म हात जोडी प्रणाम गर्दछु । जो देवर्षिहरुका जन्मदाता, समस्त लोकहरुद्वारा वन्दित तथा सदा अक्षय फलका दाता हुनुहुन्छ, यस्ता पितृहरुलाई म हात जोडेर प्रणाम गर्दछु । प्रजापति, कश्यप, सोम, वरुण तथा योगेश्वरहरुका रुपमा स्थित पितृहरुलाई सधैँ हात जोडेर प्रणाम गर्दछु । सातै लोकहरुमा स्थित सात पितृगणहरुलाई नमस्कार छ । म योगदृष्टिसम्पन्न स्वयम्भू ब्र)माजीलाई प्रणाम गर्दछु । चन्द्रमाको आधारमा प्रतिष्ठित तथा योगमूर्तिधारी पितृगणहरुलाई म प्रणाम गर्दछु । साथै सम्पूर्ण जगत्का पिता सोमलाई नमस्कार गर्दछु तथा अग्निस्वरुप अन्य पितृगणलाई पनि प्रणाम गर्दछु किनकि यो सम्पूर्ण जगत् अग्नि र सोममय छ । जो पितृहरु तेजमा स्थित हुनुहुन्छ, जो यी चन्द्रमा, सूर्य र अग्निको रुपमा दृष्टिगोचर हुनुहुन्छ तथा जो जगत्स्वरुप एवं ब्र)मस्वरुप हुनुहुन्छ, यस्ता सम्पूर्ण योगी पितृहरुलाई म एकाग्रचित्त भएर प्रणाम गर्दछु । उहाँहरुलाई बारम्बार नमस्कार छ । यस्ता स्वधाभोजी पितृ ममाथि प्रसन्न हुनुहोस् ।

**पूर्वकालमा प्रजापति रुचिले यसप्रकार आफ्ना पितृहरुको स्तुति गरेपछि प्रसन्न बन्नुभएका पितृहरुले उहाँलाई आशीर्वाद दिनुभएको थियो । साथै उहाँहरुले यस्तो वचन पनि दिनुभएको थियो– जसले भक्तिपूर्वक यस स्तोत्रबाट हाम्रो स्तुति गर्दछ, त्यसमाथि सन्तुष्ट भएर मनोवाञ्छित भोग तथा आत्मज्ञान प्रदान गर्दछौं । जसले निरोगी शरीर, धन, सन्तान आदिको इच्छा गर्दछ उसले सदैव यस स्तोत्रबाट हाम्रो स्तुति गरोस् । श्राद्धमा श्राद्धकर्ताले श्रद्धापूर्वक यस स्तोत्रको पाठ गर्दछ भने हामी निश्चय नै उपस्थित हुन्छौं तथा यसबाट हामीलाई १२ वर्षसम्मको लागि तृप्ति प्राप्त हुन्छ ।**

# आफन्तको अन्त्यावस्थामा

# के गर्ने, के नगर्ने

जब कुनै व्यक्ति कुनै यात्रामा जान लाग्दछ भने परिवारका सदस्यहरू उसको यात्रालाई सुखमय बनाउनका लागि तन, मन र धनले जुट्दछन् । तर यसको विपरीत प्राय: के देखिन्छ भने परिवारको कुनै सदस्यको मृत्युको बेला भने मानिसहरू शोकमा डुब्दछन्, रुने कराउने गर्दछन् । यस्तो बेला मृत्यु पनि एक यात्रा हो र यसलाई पनि सुखमय बनाउने प्रयास गर्नुपर्दछ भन्ने कुरा उनीहरू भुल्दछन् । सत्य त यो हो कि मृत्यु यात्रा मात्र होइन, 'महायात्रा' हो । यसैले, परिवारका प्रत्येक सदस्यले आफ्नो प्रियजनको यस महायात्रालाई सुखमय बनाउनका लागि पहिलेभन्दा पनि अधिक प्रयास गर्नुपर्दछ ।

(क) मृत्युको बेला भुलेर पनि रुने, कराउने गर्नुहुँदैन किनकि यस्तो बेला रुनाले मृतात्मालाई घोर पीडा मिल्दछ । आफन्त रुँदा जुन आँसु र कफ निस्कन्छ, त्यसलाई मृतात्माले बाध्य भएर पिउनुपर्दछ । मृत्यु साधारण यात्रा होइन । साधारण यात्रामा यात्री सम्पूर्ण कामका लागि स्वतन्त्र हुन्छ । उसले चाह्यो भने आत्मीयजनले दिएको पदार्थ खान सक्छ, नचाहे खाँदैन पनि । तर मरेपछि उसको यो स्वतन्त्रता खोसिन्छ र आत्मीयहरूले जे दिन्छन्, त्यही नै उसले खानुपर्दछ । त्यसबाहेक अन्य कुरा उसले खान पाउँदैन । शास्त्रले भनेको छ–

**श्लेष्माश्रु बान्धवैर्मुक्तं प्रेतो भुङ्क्ते यतोऽवशः । अतो न रोदितव्यं हि क्रियाः कार्याः स्वशक्तितः ॥** (याज्ञवल्क्यस्मृति, प्रायश्चित्ताध्याय १।११; गरुड पुराण, प्रेतखण्ड १५।५८)

अर्थात्, मृतकका लागि आत्मीयजनले भुलेर पनि रुनु हुँदैन, अपितु उसको परलोकलाई सुधार्नका लागि हरसम्भव प्रयास गर्नुपर्दछ । रुनाले आँखाबाट जुन आँसु र नाकमुखबाट जुन कफ निस्कन्छ, मृत प्राणीले यसैलाई नै बाध्य भएर खानु, पिउनुपर्दछ किनकि उसको नाममा अरुले जे दिन्छन्, त्यो उसले खानैपर्दछ । शरीर भएको बेलामा जस्तो मन लागे खाने, मन नलागे नखाने गर्न पाइँदैन ।

तसर्थ यस्तो बेला रोएर हामी आफ्ना मृतकजनलाई केवल कफ र आँसुजस्ता घृणित वस्तुमात्र खुवाउँदैनौं, उहाँहरूलाई स्वर्गबाट पनि तल गिराउँदछौँ–

**शोचमानास्तु सस्नेहा बान्धवाः सुहृदस्तथा । पातयन्ति गतं स्वर्गमश्रुपातेन राघव ॥** (वाल्मीकिरामायण)

कहाँ मृतात्मा आफ्नो पुण्यको बलले स्वर्ग पुगेको थियो तर हाम्रो रुने भूलले उसलाई त्यहाँबाट तानेर तल खसाइदियो भने यो भूल कति पीडादायी हुन्छ ? अत: नरावतार अर्जुनले जस्तै शोक, मोहलाई टाढा राखेर मृतव्यक्तिको परलोक राम्रो बनाउने प्रयासमा लाग्नुपर्दछ । मरणासन्न व्यक्तिको सामुन्ने शोकको प्रदर्शन त गर्नै हुँदैन ।

शास्त्रमा रुने विधान पनि छ, तर कहिले ? जब दाहक्रिया (जलाउने क्रिया) द्वारा मृतकको शरीरलाई संस्कार गर्न लागिन्छ तब कपालक्रिया (शवदाहको बेला शवको खप्पर फोर्ने क्रिया) गरेपश्चात् परिवारजन उच्च स्वरमा रुनु पर्दछ । त्यतिबेला उसलाई आफ्ना आत्मीयहरूबाट प्रेमको स्वाद आवश्यक पर्दछ । यस्तो बेला आफ्ना प्रियजनका प्रेमाश्रुको आस्वाद पाएर ऊ प्रफुल्लित हुन जान्छ ।

**रोदितव्यं ततो गाढमेवं तस्य सुखं भवेत् ।**

(गरुड पुराण, प्रेतखण्ड १५।५१)

(ख) प्राय: मानिसहरू शोकको आवेगमा आएर मर्न लागेको व्यक्तिसँग सोध्दछन्– 'तपाईं मलाई चिन्नुहुन्छ ? म तपाईंको छोरा हुँ', 'म तपाईंको मित्र हुँ' आदि । यस्तो चेष्टा कहिल्यै पनि गर्नु हुँदैन । यस्तो गर्दा भयानक भूल हुन जान्छ । यसो गर्दा हामी मृतकको आत्मालाई यस संसारमा नै घिसारेर ल्याउँछौँ र सांसारिक बन्धनमा बाँधिदिन्छौँ । त्यस्तो बेलामा हाम्रो प्रयास त मरणासन्नलाई निरन्तर भगवान्को नै स्मरण हुँदै रहोस् भन्ने हुनुपर्दछ ताकि एकक्षणका लागि पनि लौकिक संसारको सम्झना नआओस् । अत: भगवान्को नाम नै स्मरण गराइरहनुपर्दछ ।

जय गुरुदेव !

# मृतात्मासँग कुराकानी

तपाईं हाम्रो चारैतिर एउटा यस्तो संसार पनि छ जुन देखिँदैन। यस अदृश्य संसारका प्राणीहरू यसका लागि बराबर प्रयत्न गर्दछन् कि तपाईं हाम्रो माध्यमबाट आफ्ना कुरा भन्न सकियोस् तथा आफ्नो इच्छा पूरा गर्न सकियोस्। यसै सम्बन्धमा एउटा रोचक लेख यहाँ प्रस्तुत छ।

हामीले जे देखेका छौं, जे सुनेका छौं, जे स्पर्श गरेका छौं, यो नै सबैथोक होइन। यो त केवल स्थूल रूप हो। यस स्थूल शरीरमा पनि अन्य सात प्रकारका शरीर हुन्छन्, जुन क्रमशः सूक्ष्मतर हुँदै जान्छन्। यी शरीरहरूलाई इच्छा शरीर, भावना शरीर, सूक्ष्म शरीर आदि भनिन्छ।

यस पृष्ठभूमिमा मृत्युलाई बुझौं। हाम्रो भौतिक शरीर समाप्त भएपछि, यसको विखण्डन हुनासाथ इच्छा शरीर स्वतः नै सक्रिय हुन्छ र आफ्नै गतिले कार्य गर्न थाल्दछ। इच्छा शरीरको पनि एउटा सीमा हुन्छ, निश्चित जीवन हुन्छ। यसपछि यो इच्छा शरीर पनि विखण्डित हुन्छ र यसबाट पनि सूक्ष्म शरीर क्रियाशील हुन्छ। यो निश्चित हो कि जब मृत्यु हुन्छ, यो केवल बाह्याकारको हुन्छ। यसको मूलाधार आत्माको मृत्यु हुँदैन। यसबाट आत्मा सूक्ष्म शरीरमा रहेर क्रियाशील हुन्छ। सूक्ष्म शरीर भौतिक शरीरको सूक्ष्म रूप हो। अतः यसमा इच्छाहरू, आकांक्षाहरू, भावनाहरू पनि पहिलेजस्तै जीवित नै रहन्छन्। सूक्ष्म शरीर यी इच्छा, आकांक्षाहरूको पूर्तिमा बारम्बार क्रियाशील रहन्छ। तर सूक्ष्म शरीरमा स्थूल देहको अभावमा ती इच्छाहरू पूरा गर्ने क्षमता रहँदैन र ती सूक्ष्म शरीरमा रहने आत्माहरू इच्छापूर्तिका लागि व्यग्र रहन्छन्, यी आत्माहरू यसै संसारनजिकै भट्किँदै रहन्छन्। उनीहरूको इच्छा हुन्छ जसरी पनि कुनै मानव शरीर मिलोस् जसको माध्यमबाट आफ्नो इच्छा पूर्ण गर्न सकियोस्। जुन व्यक्तिमा जति धेरै संवेदनशीलता हुन्छ, त्यो व्यक्ति त्यति नै राम्रो माध्यम बन्दछ।

अन्य माध्यमबिना पनि सूक्ष्म शरीरको भाषा बुझ्न सकिन्छ। योगीजन यसो गर्न सक्दछन्। तर यसको लागि एकाग्रता जरुरी हुन्छ जुन ध्यान, योग आदिबाट प्राप्त गर्न सकिन्छ। त्यसैले पनि ध्यान, योग, साधना गर्नेहरूले सहजरूपमा आत्माको भाषा बुझ्न सक्दछन्। आत्मासँग कुरा गर्ने धेरै पद्धतिहरू प्रचलित भए पनि सबैभन्दा भरपर्दो माध्यमचाहिँ ध्यान साधनाबाट उच्चता हासिल गरेर तथा सूक्ष्म शरीरको माध्यमबाट कुरा गर्नु नै हो र यसैतर्फ लाग्नु नै श्रेयस्कर हुन्छ।

यी आत्माहरूसँग सम्पर्क स्थापित गर्नका लागि कैयौं साधनहरू छन्, जसमा प्लेन्चिट प्रयोग, तिपाई प्रयोग, स्वतः लेखन प्रयोग, माध्यम प्रयोग आदि प्रचलित छन्।

यस अंकमा प्लेन्चिट प्रयोगका बारेमा केही जानकारी दिन गइरहेका छौं।

**प्लेन्चिट प्रयोगः**

आत्माहरूसँग सम्पर्क स्थापना गर्न प्लेन्चिट प्रयोग धेरै पहिलेदेखि गरिँदै आएको पाइन्छ। यो विधि पश्चिमी मुलुकहरुमा पनि धेरै प्रयोग भएको पाइन्छ। यसलाई पनि धेरै तरीकाबाट गरिन्छ- कुनै लेख्ने, कुनै अक्षरहरू छोप्ने, कुनै अक्षरहरू देखाउने आदि।

यी आत्माहरूले हल्लाखल्ला तथा चहकिलो प्रकाश सहन सक्दैनन्। अतः यिनीहरू मधुरो प्रकाश तथा शान्त वातावरणमा नै आउँछन्। यसैले यसका लागि उपयुक्त समय भनेको (सूर्यास्तपछि) साँझ अथवा रातिको हुन्छ। कोठामा अलिकति झ्याल खोलेर मधुरो प्रकाशमा (वा मैनबत्तीको प्रकाशमा) यो प्रयोग गर्दा आत्मालाई आउन अझै सजिलो पर्दछ। कोठा स्वच्छ र सफा हुनुपर्दछ, सुगन्धित वातावरणका लागि कोठामा सुगन्धित धूप (अगरबत्ती) बाल्न सक्नुहुनेछ। कम्तीमा ३ जना व्यक्ति माध्यमको रूपमा तथा अरू दर्शकको रूपमा रहनुपर्दछ। अनि फेरि आफूले चाहेको आत्मालाई बोलाउँदा त्यही आत्मा नआउन पनि सक्छ, यदि सम्बन्धित आत्माको सूक्ष्म शरीर माथिल्लो लोकमा पुगिसकेको रहेछ भने यस्तो अवस्थामा आउन सक्तैनन्। एउटा कुरा के ख्याल गर्नुपर्छ भने मृतात्मा एकदमै संवेदनशील हुन्छ, त्यसैले उसलाई बोलाउँदा, कुरा गर्दा तथा विदा गर्दा नम्र भाषामा सम्मानपूर्वक गर्नुहोस् तथा मृतात्माको खिल्ली उडाउने, ठट्टा गर्ने नगर्नुहोस्, उसले भन्न नचाहेको कुरा बारबार सोधिरहने नगर्नुहोस्, हँसी मजाकको लागि पनि यो नगर्नुहोला।

**पहिलो तरीकाः**

यसको लागि माथि चित्रमा देखाइएजस्तै प्लाइवुड वा यस्तै काठको ७-८ इन्चजति लम्बाइ चौडाइ भएको टुक्रालाई चारकुने अथवा पान आकारको जस्तो बनाउनुहोस्। माथि चित्रमा देखाएजस्तै यसलाई ३ वटा खुट्टा हालेर पछाडिको दुइवटा खुट्टाको टुप्पामा बल बियरिङ राखेर अथवा यस्तै

स्वतन्त्ररूपले चारैतर्फ गुड्नसक्ने बनाउनुहोस् र अगाडिको खुट्टाको स्थानमा पेन्सिलको प्रयोग गर्नुहोस् ।

जब प्रयोग शुरु गरिन्छ तब माथि उल्लिखित समय र वातावरणमा समतल सतहमा कागजको पाना राखेर त्यसमाथि त्यस काठको यन्त्रलाई राख्नुहोस् । तीन वा चार जनाले आफ्नो एक-एक औंला हल्कासँग त्यसमाथि राख्नुहोस्। अनि प्रत्येकले मनमनै कुनै एक एक मृतात्मालाई आह्वान गर्नुहोस् । केही बेर लगातार आह्वान गरेपछि कुनै एक मृतात्मा अवश्य नै आउँछ । जब कुनै आत्मा आउँछ त्यो पेन्सिल आफै सर्न थाल्दछ । यसको प्रमाणको लागि तपाईंले सोध्न सक्नुहुनेछ कि 'के तपाईं आउनुभयो ?' तब मृतात्माले पेन्सिलको सहाराले 'हो' अथवा 'Yes' शब्द लेख्दछ । यस्तो स्थितिमा जब तपाईंले उनको नाम सोध्नुहुन्छ तब यो अनुभव गर्नुहुन्छ कि तपाईंको स्पर्श मात्रले पनि पेन्सिल घुमिरहेको छ र नाम लेखिरहेको छ । जब पेन्सिल रोकिन्छ तब कागजमा लेखिएको नाम तपाईंले सजिलै पढ्न सक्नुहुन्छ ।

यस प्रयोगको लागि मृतात्मा पढे लेखेको हुन आवश्यक छ। जब कुनै आत्मा आएर पेन्सिलले नबुझिने अक्षरहरू लेख्न थाल्छ तब यो बुझ्नुपर्दछ कि मृतात्माले पढे लेखेको छैन। तब त्यसलाई नम्रतापूर्वक विदा गरेर अर्कोलाई बोलाउनुपर्दछ ।

**दोस्रो तरीकाः**

एउटा २ फिटजति लम्बाइ र त्यति नै चौडाइ भएको सन्माइका वा चिल्लो सतहमा वा कागजमा अंग्रेजीको A देखि Z सम्मका अक्षरहरू, 0 देखि 9 सम्मका अंकहरू, Home, Yes, No तथा अन्य स्पष्ट अक्षरमा आफ्नो इच्छाअनुसार लेख्नुहोला । यसको लागि सजिलो होस् भनेर एउटा चित्र पनि दिइएको छ, त्यही अनुरूप गर्न सक्नुहुनेछ । यसमा अंग्रेजीमै लेख्नुपर्छ भन्ने छैन, नेपालीमा क, ख लेख्दा पनि हुन्छ तर अंग्रेजीमा लेख्दा मात्रालगायतका कठिनाइ नपर्ने तथा सहज र सरल हुने भएकोले अंग्रेजी नै उपयुक्त हुन्छ । एउटा पैसाको सिक्का अथवा यस्तै किसिमको वस्तु पनि आवश्यक पर्दछ ।

सम्पूर्ण तयारीपछि ३ जना व्यक्तिहरू त्यस चित्रको नजिक बस्नुहोस्, सिक्कालाई Home लेखेको ठाउँमा राखेर सिक्कामाथि तीनै जनाले आफ्नो चोरी औंलाको टुप्पाले हल्कासँग छुनुहोस् । अब तीन जनामध्ये एक जनाले ३ पटक जति आफूले चाहेको मृतात्मालाई बोलाउनुहोस् । उदाहरणका तल दिइएको छ ।

'मेरा हजुरबुबा ................ज्यूको आत्मा, तपाईं जहाँ भए पनि कृपया यहाँ आएर यस सिक्कामा बसिदिनुहोस् र प्रश्नको जवाफ दिएर हामीलाई सहयोग गरिदिनुहोस् । यदि तपाईं आउनुभएको छ भने Yes मा जानुहोस् ।'

३ पटकजति भनिसकेपछि सिक्का आफैँ सर्न थाल्छ, सिक्कामा ३ जनाले हल्का छुनु मात्र पर्दछ, सिक्का जता सर्छ स्वतन्त्ररूपमा सर्न दिँदै सिक्कासँगसँगै औंलाहरू सर्न दिनुहोस् । तर मृतात्मा सामान्य पढे लेखेको तथा अंग्रेजी अक्षरहरू बुझ्न सक्ने हुनुपर्दछ । कुनै मृतात्मा आएको छ भने सिक्का सर्न थाल्छ र Yes मा गएर रोकिन्छ । त्यसपछि तपाईंले अन्य प्रश्न सोध्न सक्नुहुनेछ । जस्तै 'तपाईंको जेठो छोराको नाम के हो ?' जेठो छोराको नाम सागर रहेछ भने सिक्का S अक्षरमा पुगेर केही बेर रोकिन्छ, अनि फेरि सर्दै A अक्षरमा गएर रोकिन्छ, यसरी नै क्रमशः G, A, R हुँदै पूरा नाम भनेर फेरि Home मा फर्कन्छ । सिक्काले देखाएका अक्षरहरू ३ जनाबाहेक अरू कोही एकजनाले टिप्दै जानुहोस् । अक्षर टिप्दै जाँदा लामो लामो वाक्य पनि प्रेतात्माले भन्न सक्छ ।

तर यहाँ एउटा के समस्या हुन्छ भने तपाईंले जुन आत्मालाई बोलाउनुहुन्छ त्यही नै आयो भन्ने हुँदैन । संसारमा करौडौं भट्किएका आत्माहरू हुन्छन्, उनीहरू मानिससँग कुरा गर्न लालायित भएका हुन्छन्, त्यसमध्ये जो कोही पनि आएको हुन सक्छ । तपाईंले बोलाएकै आत्मा हो, होइन भनेर जाँच्नका लागि त्यस मृतात्मासँग सम्बन्धित २-४ वटा कुरा सोधियो भने थाहा पाउन सकिन्छ । जस्तै- 'तपाईंकी श्रीमतीको नाम के हो ?', 'तपाईंको मृत्यु कहिले भयो ?' आदि । सही आत्मा नभएको खण्डमा 'तपाईंले हामीलाई आएर सहयोग गरिदिनुभएकोमा धन्यवाद, अब तपाईं विदा भइदिनुहोस्, विदा भइदिनुहोस्, विदा भइदिनुहोस्' भनेर सम्मानपूर्वक २-३ पटक भन्नुहोस् त्यो मृतात्मा विदा भएर जान्छ, फेरि सिक्का चल्न छोड्दछ । फेरि आफूले चाहेको आत्मालाई बोलाउन सक्नुहुनेछ । आफ्ना प्रश्नहरूको जवाफ पाइसकेपछि तथा कुराकानी सकिइसकेपछि मृतात्मालाई विदा गर्न नबिर्सनुहोस् । खेलवाडमा, लहडमा, जादूचटक देखाउने उद्देश्यले यो प्रयोग नगर्नुहोला । जय गुरुदेव !

*(मंत्र तंत्र यंत्र विज्ञान, सन् १९८१ जुनमा प्रकाशित लेखमा आधारित)*

# मूर्तिपूजाप्रति कटाक्ष किन

अचेलका तन्नेरीहरु अध्यात्मप्रति कहाँ चासो राख्छन् र ? भन्ने शंकालुहरुले ती शहरी युवाहरुलाई हेरे पुग्छ, जो काठमाण्डौका बसहरुमा चढ्दा नजिकै मन्दिर देखिए दाहिने हातलाई छिटोछिटो छाती र निधारबीच हल्लाउछन् तीनपटकजति । मानवशास्त्री डोरबहादुर विष्टका अनुसार धेरैले कर्मलाई भन्दा भाग्यलाई प्राथमिकता दिने नेपाली समाज गहिरो रुपमा धार्मिक छ । तर सबैभन्दा धार्मिकचाहिँ होइन । जनवरी २००४ मा बी.बी.सी.ले १० मुलुकमा गरेको सर्वेक्षणले विश्वमै नाइजेरिया सबैभन्दा धार्मिक भएको देखाएको थियो । अफ्रिकी मुलुकका ९० प्रतिशतभन्दा बढीले भगवान्मा विश्वास गर्ने, नियमित प्रार्थना गर्ने र आस्थाका लागि मर्ने बताएका थिए । लेबनान र अमेरिकामा ७१ प्रतिशतले भगवान् वा आस्थाका लागि मर्न तयार रहेको बताए भने धेरैजसो देशमा ८० प्रतिशतभन्दा बढीले भगवान् वा कुनै त्यस्तो उच्च शक्तिप्रतिको विश्वासले आफूलाई राम्रो मानव बनाएकोमा सहमति जनाए । यो टिप्पणी २०६५ भदौ १४ गते शनिबारको 'कान्तिपुर दैनिक' मा प्रकाशित लेखबाट लिइएको हो । नपरुन्जेल गर्लान् नगर्लान् आफ्नो ठाउँमा छ तर परेपछि हे भगवान् ! भनी पुकार्ने हो कि, बलि चढाउने, भाकल राख्ने हो कि, मठ मन्दिर धाउने हो कि, अबीर अक्षताले ईश्वर भाक्दै मूर्ति पूज्ने हो कि, के-के गर्ने र गर्नुपर्ने हो मानिसले कुनै कसर बाँकी नराख्ला । यो व्यक्तिगत, सामूहिक र राष्ट्रगत कुनै दायरामा मात्र सीमित भएको देखिँदैन । विश्वकप फुटबल प्रतियोगितामा आफ्ना राष्ट्रिय खेलाडीहरु विजयी हुन् भनेर अफ्रिकाका आस्थावान् व्यक्तिहरुले परम्परागत तान्त्रिक पूजन गरेका समाचार गएको २००६ को विश्वकप प्रतियोगिताताका टेलिभिजन र अखवारमा छ्यापछ्याप्ती देखिएका थिए । भारतमा त अझ आफ्ना प्रिय नेता, अभिनेता, गायक, संगीतकर्मी, कलाकार, आदिका नाममा व्रत उपवास बस्ने, देवीदेउताका ठूलै अनुष्ठान नै गर्ने गरेको पनि थाहा पाइएकै कुरा हो ।

मानिस भावनात्मक प्राणी हो । भावनाले नै उसलाई असल अथवा खराब कर्मतर्फ डोऱ्याउँछ । भावनाबाटै भक्तले ईश्वरलाई साकार गर्दछ, ईश्वरसम्म पुग्दछ । भावनाकै माध्यमले उसले आफूभित्र ईश्वरको बास पाउँछ । यतिमात्र नभई जगत्का कणकणमा ईश्वरलाई देख्न पुग्छ । भावनाको सर्वोच्चताले नै उसलाई ईश्वरमय स्थितिमा प्रविष्ट गराइदिन्छ । मठ मन्दिर, मस्जिद, गुरुद्वार, गिर्जाघर आदि बन्नु सबै भावनाकै उपज हुन् । भावनाले नै निर्जीवलाई पनि सजीवझैँ जीवन्तता प्रदान गरेको छ । यही

भावनाबाटै मानिसले निर्जीव ढुङ्गालाई ईश्वर विग्रहको स्वरुप दियो, उसको भावनाको उदात्त शक्तिले नै ढुङ्गा आदिको मूर्तिमा पनि स्वयम् ईश्वर र उसको शक्ति प्रतिष्ठित हुन सम्भव भयो ।

शास्त्रहरुमा भने हजारौँ प्रकारका व्याख्याहरु पाइन्छन् । एउटा व्याख्याअनुसार ईश्वर निर्गुण, निराकार, आदि अनन्त, अदृश्य शक्ति हो जसलाई कुनै पनि स्वरुपमा प्रतिविम्बित गर्न सकिँदैन । अर्को सिद्धान्तअनुसार, पूजा, उपासना, साधना, भक्ति आदि कार्यहरुको लगि कुनै न कुनै स्वरुपको चित्र, मूर्ति, विग्रहको आवश्यकता पर्दछ जसलाई सामुन्ने राखेर आफ्नो भावना प्रकट गर्न सकियोस् । यही कारण हो विश्वमा लाखौँलाख पूजास्थल, तीर्थस्थल, मन्दिर, मस्जिद, गुरुद्वार, गिर्जाघर आदि बनेका । त्यहाँ पुग्दा मानिसमा जुन प्रकारको भिन्दै भाव सृजना हुन्छ त्यही भाव अन्यत्र पाउन सम्भव हुँदैन । घरमा पनि पूजा स्थानमा मूर्ति, चित्र आदि स्थापित गरिएको छ भने त्यहाँ अनुभूत हुने वातावरण घरका अन्य कोठाहरुमा पाइँदैन । त्यसैले भक्ति, साधनाको प्रथम स्थितिमा यस प्रकारको विग्रहको आवश्यकता पर्दछ भन्ने मान्यता रहेको पाइन्छ । मूर्ति, चित्र आध्यात्मिक बाल्यकालको एउटा आधार हो । उपासनाको प्रारम्भमा कुनै आकार तथा स्वरुपको आवश्यकता अवश्य पर्दछ । यो केवल परमात्माको एउटा बाह्य प्रतीक वा स्वरुप हो जसले ईश्वरको सहज स्मरण गर्न सहयोग पुऱ्याउँदछ । मूर्तिकै कारणले विभिन्न प्रकारका पूजा पाठका पद्धतिहरु सम्भव भएका छन् जुन स्वरुपले हामीलाई बौद्धिक विचारतर्फ उन्मुख गराउँदछ किनकि यसबाट मस्तिष्कको स्थायित्व प्राप्त हुन्छ । परमात्मामा सीधै ध्यान लगाउने, समाधिस्थ हुने सामर्थ्य प्रत्येक व्यक्तिलाई प्राप्त हुँदैन, सबैलाई यो सम्भव पनि छैन कि प्रारम्भिक अवस्थामै सबै साक्षात्कार होस् । यसैले यस्ता ध्यानोपासना क्रियाहरुको लागि कुनै पनि प्रकारको विग्रहको आवश्यकता पर्ने नै भयो । वर्तमान युगमा सबै प्रकारका, सबै आत्मिक अवस्थाका मनुष्यहरुको लागि मूर्तिपूजा नै सरल र सर्वव्यापक पूजापद्धति हुन पुगेको छ ।

मूर्ति पूजा हिन्दु धर्ममा मात्र होइन सबैजसो धर्ममा कुनै न कुनै प्रकारले विद्यमान रहेकै छ । ईसाई समुदायले क्रसको रुपमा, मुसलमानहरु कावाको रुपमा ईश्वरलाई विम्बित गरेकै हुन्छन् । कहीँ कतै उच्चस्तरका योगी एवं वेदान्तीहरुबाहेक संसारका सबै धर्म सम्प्रदायमा कुनै न कुनै स्वरुपमा ईश्वरलाई विराजमान भएको मान्दछन् किनकि मानसिक कल्पना पनि एक प्रकारले मूर्तिकै प्रारुप हो । विषयान्तरले यी दुईमा कुनै ठोस भेद नभएता पनि त्यो आंशिक मतभेद मात्र हो किनभने उच्चस्तरका उपासक, चिन्तकहरु पनि आफ्नो मस्तिष्कमा परिकल्पित मूर्त स्वरुपमै ध्यान गर्दछन् । यसप्रकार सबैजसो आस्थावान्हरु मूर्तिपूजक नै हुन्छन् । बुद्धिलाई सूक्ष्म सारतत्वको अपेक्षा रहन्छ, चाहे छायाङ्कन चित्राङ्कन यसका माध्यम नै किन नहुन् जबकि एउटा तत्वज्ञानी वेदान्तीलाई पनि भट्किरहेको मन केन्द्रित गर्नको लागि ओम (ॐ) रुपी आकृतिको आधार आवश्यक रहन्छ । मूर्ति पूजाको ज-जसले जतिसुकै आलोचना गरे पनि यसलाई देखावटी ढोंग, रुढीवाद, पाखण्ड, भने पनि, मूर्खता कहलाए पनि यो सबैमा अस्तित्ववान् थियो, छ र रहिरहने छ । मूर्ति विरोधी त्यो व्यक्ति यदि कुनै देशको महान् नेता, वीर योद्धा, शहिद, साहित्यकार आदि भयो भने ऊ मरेपछि ठाउँठाउँका सडक, गल्लीका चोकहरुमा उसको सालिक ठडाइएकै पाइन्छ । तिनै मूर्तिविरोधी शिक्षाबाट दीक्षित चेलाहरु पनि मरेकालाई सालिकमा फूलमाला चढाई श्रद्धाञ्जलि दिन पुगेकै हुन्छन् । यसरी सबैमा सर्वस्थापित मूर्तिपूजालाई यत्रो कटाक्ष किन ? मानिसका गतिविधि, चालचलन, रीतिरिवाज, उसका लागि मान्य-अमान्य, समर्थन-आलोचना आदि सबै भावनाकै विस्तार हुन् । यी सवै विषयमा असलपन, सुस्वरुपता भएमा मात्र त्यो लोक कल्याणकारी हुन सक्दछ । त्यसले नै सामाजिक सरलता, सहजता, सुव्यवस्था ल्याउँदछ । अतः मानिसमा सुभावनाको विस्तार नै मुख्य र महत्त्वपूर्ण हो । यसैले होला शास्त्रमा भनिएको :

सर्वे भवन्तु सुखिनः सर्वे सन्तु निरामयाः ।
सर्वे भद्राणि पश्यन्तु मा कश्चिद् दुःख भाग्भवेत् ।।

जय गुरुदेव !

यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'अकथ कहानी प्रित की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।

# विरहभित्रको प्रेम

हिरदय माही प्रेम जो नयनन झलके आय,
विरह विथा कासूं कहूं कौन मिलावे धाय ।

मैले के गर्न सक्छु ? भित्रको प्रेमको झिल्को त आँखाबाट प्रकट भई नै हाल्छ... यसलाई मानिसहरूले पढ्छन्... यसलाई लिएर कुरा गर्न थाल्छन् । उनीहरूले जे जस्तो सोच्छन्, सोच्न दिऔं । मैले त आफ्नो जीवनको एउटा बाटो तय गरेकी छु, म त्यस बाटोमा हिँड्छु नै, म त उसलाई पाउँछु नै किनकि अरू कुनै मर्द यस संसारमा छैन, जति छन् नामर्द छन्–

नामर्दों का क्या करुं मर्द गयो मोहे त्याग,
मैं तो क्वांरी ही रही तुझ बिन कई निशि जाग ।

जीवनभरि म त कुमारी नै रहें... जीवनभरि नामर्द त भेटिए... तर नामर्दहरूलाई पाउनु र कुमारी रहनु बराबर छ । आवश्यकता छ कि कुनै मर्द भेटियोस्... तिमी भेटिऊ र म निश्चिन्त हुन पाऊँ ।

अगिन बरे हियरा जरे भये कलेजे छेद ।

आगो बलिरहेको छ, यस्तो लागिरहेको छ जस्तो सारा हृदय जलिरहेको छ र कलेजोमा प्वाल परेको छ । एक-एक प्वालले तिम्रो सम्झनालाई, तिम्रो अंकमाललाई सम्झाइरहेको छ... यस्तो अवस्थामा निद्रा लाग्दछ पनि कसरी ? किनकि एउटा यस्तो चोट परेको छ जसले हृदयलाई छियाछिया पारेको छ–

जो कोई विरही नाम के तिनको कैसी नींद,
शस्तर लागा नेह का गया हिये को बींध ।

मेरो प्रिय; वाणले मेरो कलेजोलाई छेडिरहेको छ... उसको प्रतीक्षा गरिरहेकी छु त्यसैले त अङ्गअङ्ग टुटेका छन् । अब यस शरीरमा कुनै जोड लगाउन सकिन्न । अब त केवल ऊ आएर नै यस शरीरलाई जोड्न सक्दछ–

पिव मेरो सबदी बान है अङ्ग अङ्ग डारे तोड,
प्रेम खेत घायल गिरे टांका लगे न जोड ।

अब म अन्य तरीकाले आफ्नो जीवन अघि बढाउन पनि चाहन्न किनकि जुन तीर मलाई लागेको छ, म त्यसको सहाराले नै आफ्नो जीवनलाई काट्न चाहन्छु । म त के भनुँ ? यो त अकथ कहानी हो, मैले त धेरै प्रतीक्षा गरेकी छु–

आंखड़ियां झांई पडी पंथ निहारि निहारि,
जभड़ल्या छाला पड़्या राम पुकारि पुकारि ।

अब त जिब्रोमा पनि छाला परिसकेको छ,

बारम्बार पिउपिउ रट्दारट्दै करोडौँपटक तिम्रो नाम लिएँ कि जिब्रोमा छाला पऱ्यो । अब त बोल्न पनि सक्दिन, अब त केवल एउटै कुरा बाँकी छ–

इस तन का दीवा करूं बाती मेलूं जीव,

लोहि न सींचूं तेल ज्यों कब मुख देखूं पिव ।

अब शरीरलाई नै दीयो बनाऊँ, मेरो जुन प्राण छ त्यसलाई म दीयोको बत्ती बनाऊँ र त्यस तेलजस्तै आफ्नो रगतलाई जलाइरहूँ... र प्रतीक्षा गरिरहूँ... तिम्रो एक झलक पाउनको लागि । जीवनको अन्तिम क्षणमा पनि यदि तिमीसँग भेट हुन्छ भने, मिलन हुन्छ भने त मेरो उद्देश्य पूरा हुन्छ... किनकि मलाई तिम्रो आशा छ, मलाई विश्वास छ कि एक न एक दिन यो मेरो यात्रा, यो मेरो बाटो मलाई प्राप्त हुन्छ नै ।

नैनन तो झरि लागिया रहट बहे दिस बार,

पपीहा ज्यू पिउ-पिउ रटूं पिया मिलन की आस ।

एक-एक क्षण म ऊसँग मिल्ने आशामा, पिउ-पिउ गर्दै रहन्छु । यसका अतिरिक्त त मलाई केही आउँदैन पनि, न त म अन्य कुनै शब्द नै प्रयोग गर्न चाहन्छु । मेरो मुखबाट अरू कुनै शब्द ननिस्कोस्, केवल पिउ शब्द मात्र निस्कोस् किनकि यसै शब्दको सहारामा यस कठिन बाटोलाई पार गर्छु । मानिस कति पागल छन् ! उनीहरू म बिरामी भएको ठान्दछन् र वैद्यलाई बोलाउँछन्... उनले के बुझ्लान् ? उनले मेरो रोगलाई बुझ्दछन् पनि कसरी ?

कबीरा वैद्य बुलाइया पकड़ क देखि बांह,

वैद न जाने वैदगी, करक कलेजे मांहि ।

वैद्य आफ्नो विद्या जान्दैनन्, उनलाई उपचार गर्न आउँदैन किनकि मेरो शरीरमा कुनै पनि रोग छैन । ममा जुन घाउ छ त्यो कलेजोभित्र छ । जबसम्म कलेजोको घाउको उपचार गरिन्न तबसम्म म कसरी ठीक हुन्छु ?

र, म त आफ्नो जीवनमा बिना पिउ पानीबाट बाहिर निकालिएको माछाजस्तै तड्पिरहेकी छु । यस्तो लागिरहेको छ कि कुनै क्षण मृत्यु आउँछ र म समाप्त हुन्छु । हरेक क्षण म प्रतीक्षा गरिरहन्छु कि मृत्यु अहिले नै आओस्, कुनै त सहारा मिलोस्, कि त विरहको सहारा छ कि त मृत्युको । तर मलाई कुनै पनि पछुतो छैन । यदि मृत्यु पनि मेरो समीप आउँछ भने मलाई कुनै पनि प्रकारको दुःख हुने छैन– आउँछ भने आओस्, किनकि मृत्युपछि म उसको समीप जान सक्छु ।

नीर बिनु मीन दुःखी क्षीर बिन शिशु जैसे,

पीर जाके औषध बिनु कैसे रह्यो जात है ।

जसको कलेजोमा चिन्ता छ, ऊ कुनै अन्य औषधिले कसरी ठीक हुन सक्दछिन्, म कसरी ठीक हुन सक्छु ? बाँकी औषधिहरूको के अर्थ ? किनकि मेरो त दुःखाइ अरू नै हो, मलाई मात्र मेरो दुःखाइ थाहा छ । यसबारे म समाजलाई बताउन पनि सक्दिन र घरकालाई भन्न पनि सक्दिन ।

चातक ज्यों स्वाति बूंद, चन्द्र को चकोर जैसे,

चन्दन की चाह करि, सर्प अकुलात है ।

निर्धन ज्यों धन चाहे, कामिनी पिउ को चाहे,

ऐसी जाकी चाह, ताको कछु न सुहात है ।

प्रेम को प्रभाव ऐसो, प्रेम तहाँ नेह कैसो,

सुन्दर कहत यह, प्रेम की ही बात है ।

–जहाँ प्रेम छ त्यहाँ मिलन कसरी ? जहाँ प्रेम छ त्यहाँ उदासी कसरी ? त्यहाँ त तिल-तिल गरेर जल्नु नै प्रेमको रीति हुन्छ ।

यो बाटो नै यस्तो हो कि यसमा तरवारको धारमा हिँड्नुपर्छ । यस बाटोमा त पाउ रक्ताम्य हुन्छ र जसको पाउ रक्ताम्य हुन्छ ऊ नै यो प्रेम पथमा हिँड्न सक्छ... र जो यसमा हिँड्छ उसलाई त यो खतरा सहनै पर्दछ, यस कुराको मलाई पछुतो छँदैछैन, यसपछि पनि मेरो चिन्तन त यही छ कि म हर हालतमा आफ्ना पिवसमीप पुग्छु नै... शृंगार गर्छु... सजिन्छु... उसलाई रिझाउँछु, नाच्छु... गाउँछु... जसरी ऊ खुशी हुन्छ, म त्यसै गर्दछु ।

मेरो जीवनको एक मात्र चिन्तन यही हो कि म उसलाई खुशी तुल्याऊँ । म त अरू कुनै प्रकारको इलम, कुनै प्रकारको भक्ति, कुनै प्रकारको साधना जान्दिन... र कुनै प्रकारको साधना जान्ने मलाई जीवनमा जरुरत पनि छैन किनकि जीवनलाई मैले दाउमा लगाएकी छु र मैले यस कुराको कला जानेकी छु ! जुन दिन मैले यस घुम्तीमा पाउ राखेकी थिएँ त्यसैबेलादेखि मैले बुझें कि यो घुम्ती अत्यन्तै ऊबडखाबड छ, यसमा त काँडैकाँडा छन् । क्रमशः

जय गुरुदेव !

# गुरुकृपाबाट यस्तो पनि

शंकराचार्य ती दिनहरुमा बद्रीनाथ धाममा वेदान्त–दर्शनमा आफ्नो प्रसिद्ध शारीरक भाष्य लेख्दै हुनुहुन्थ्यो । वेदान्त–दर्शन अर्थात् ब्रह्मसूत्रमा यो सुप्रसिद्ध भाष्य हो । यसको एक–एक पङ्क्तिमा वेदान्त साधना एवं ब्रह्मज्ञानको अद्भुत रहस्य छ । आचार्यको प्रायः सम्पूर्ण दिन एकान्त चिन्तन एवं लेखनमा बित्दथ्यो । दिनको अन्तिम प्रहरमा सन्ध्यापूर्व आचार्य आफ्नो भाष्यका लिखित अंशहरु शिष्यहरुलाई पढाउनुहुन्थ्यो ।

आचार्य शंकरका शिष्यहरुमा पद्मपाद, सुरेश्वर आदि परम विद्वान् शिष्य थिए । विद्वान् शिष्यहरुको मण्डलीमा मूढमति, मन्दबुद्धि, अनपढ एउटा शिष्य पनि थिए । उनी पढे–लेखेका नभए पनि, उनको बुद्धि तीव्र नभए पनि उनको हृदय भने आचार्यप्रतिको भक्तिभावबाट भरिएको थियो । आचार्य नै उनका लागि सर्वस्व हुनुहुन्थ्यो । आचार्यको सेवा नै उनको जीवन थियो । यसका अतिरिक्त उनलाई अरू केही पनि आउँदैन थियो । उनको मूढता र मन्दबुद्धि देखेर कुनै बेला आचार्यका अन्य शिष्यहरु उनको हाँसो उडाउँथे, उपहास गर्ने गर्थे । तर यसबाट उनलाई केही फरक पर्दैन थियो । उनी त गुरुगत प्राण थिए । गुरुसेवाको अतिरिक्त उनलाई अरू कुनै चाहना थिएन । आचार्यले उनलाई आफ्नो साँझको कक्षामा बोलाउन भुल्नु हुन्नथ्यो ।

एकदिनको कुरा हो । आचार्यको नियमित कक्षाको बेला भएको थियो । पद्मपादाचार्य, सुरेश्वराचार्य, हस्तामलकाचार्यलगायत सबै भगवान् शंकराचार्यको श्रीचरणको समीप भेला भएका थिए । तर ती अनपढ सेविका/शिष्या उपस्थित थिइनन् । आचार्यलाई उनको प्रतीक्षा थियो । आचार्यका आँखाहरुले उनलाई खोजिरहेका थिए । कक्षामा विलम्ब भइरहेको थियो । उपस्थित शिष्यहरुमा प्रत्येकलाई यो प्रतीक्षा असह्य भइरहेको थियो । गुरुदेवले नयाँ के लेख्नुभएको छ भन्नेमा सबैलाई उत्सुकता जागिरहेको थियो । यो उत्सुकता चरमोत्कर्षमा पुग्यो तर पनि कसैमा केही भन्ने साहस थिएन । अन्त्यमा पद्मपादले साहस गरे– 'पाठ शुभारम्भ गर्ने कृपा गर्नुहोस् भगवन्' । 'वत्स ! मलाई आफ्नो एक शिष्यको प्रतीक्षा छ' आचार्यले उत्तर दिनुभयो । 'तर त्यो त निरा विमूढ छ, भगवन् ! ऊ आउनु र नआउनुमा केही फरक छैन ।' पद्मपादको स्वरमा विनम्रता भए पनि एउटा हेपाहापन थियो ।

भगवत्पाद शंकरबाट यो लुक्न सकेन । आफ्ना विद्वान् शिष्यहरुमा विद्वताप्रति केही अभिमान आएको छ भन्ने उहाँलाई महसुस भयो । शिष्यहरुको गर्वहरण गर्न आचार्य शंकर मुस्कुराउनु भयो र एक क्षणका लागि ध्यानस्थ हुनुभयो । ती अनपढ गँवार शिष्य गुरुदेवको लुगा धुनको लागि नै गएका थिए । यो उनको नित्यकार्य थियो । तर आज अचानक उनको अन्तःकरणमा गुरुदेवको कृपाले समस्त विद्याहरु एकैसाथ प्रकाशित भए । उनी गुरुकृपाको यस अनुभूतिमा कृत्यकृत्य भए । आफ्नो काँधमा गुरुदेवका धोएका वस्त्रहरु राखेर हात जोडेर तोटक छन्दमा आचार्यको स्तुति गर्दै उनी आइपुगे–

**विदिताखिलशास्त्र सुधा जलधे, महितोपनिषत्कथितार्थनिधे ।**
**हृदये कमले विमलं चरणं, भवशंकरदेशिक मम शरणम् ॥**
**करुणावरुणालय पालयमाम्, भवसागरदुःखविदून हृदम् ।**
**रचयाखिल दर्शन तत्त्वविदं, भव शंकरदेशिकमम शरणं ॥**

तोटक छन्दमा स्वस्फुरित यस गुरु वन्दनालाई सुनेर त्यहाँ उपस्थित सबै अवाक् भए । उनीहरुलाई ठूलो आश्चर्य त तब भयो जब उनलाई आचार्यले आदेश दिनुभयो– 'वत्स ! आज मेरो स्थानमा तिमीले यिनीहरुलाई ब्रह्मसूत्रमाथिको मेरो मन्तव्यलाई सम्झाऊ । यिनीहरुका लागि ती सूत्रहरुको पनि व्याख्या गर जसमा मैले अहिलेसम्म भाष्य लेखेको छैन' । तोटकाचार्यले 'जो आज्ञा गुरुदेव!' भनेर आचार्यको आज्ञा पालन गरेर देखाए । तोटकाचार्यको अनायास उदित भएको प्रखर प्रतिभालाई देखेर सबैलाई यस सत्यको अनुभूति भयो कि तोटकाचार्यमाथि गुरु कृपा बर्सिएको छ । 'त्राहिमाम गुरुदेव!' भन्दै सबै शिष्यहरु आचार्यको चरणमा परे । आचार्यले उनीहरुलाई निराभिमानी बन्ने सल्लाह दिनुभयो । गुरुकृपाबाट सबै कुरा सम्भव छ भन्ने सबैले अनुभव गरे । जय गुरुदेव!

## सिद्धाश्रम शक्ति केन्द्र

# सम्पर्क कार्यालय क्षेत्रपुर चितवन

परमपूज्य सद्गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको निर्देशनमा आफ्नै शैलीमा अगाडि बढिरहेको सिद्धाश्रम शक्ति केन्द्र नेपालको संगठनात्मक विस्तारको एउटा कडी सम्पर्क कार्यालय चितवन वि.सं. २०५७ पौष २७ गतेका दिन साधना तथा शिविर विभागका संयोजक तथा सावर पन्थी सदस्य २ ज्यूको समुपस्थितिमा भ.न.पा.-४ नारायणगढको विशालमार्गमा एउटा कोठा भाडामा लिएर शुभारम्भ गरिएको हो। शुरुका दिनहरुमा बेलुका आरती संचालन मात्र हुने यस सम्पर्क कार्यालयले भरतपुर, नारायणगढ र वरपरका क्षेत्रहरुमा भजन, कीर्तन, जनसम्पर्क, प्रचारप्रसार, पत्रिका विस्तार गर्दै विभिन्न मठ-मन्दिरहरुमा हुने कार्यक्रमहरुमा आफ्नो उपस्थिति, सहभागिता जनाउँदै गुरु र सिद्धाश्रम शक्ति केन्द्रको बारेमा बताउँदै गुरु र आश्रमसँग समाजका व्यक्तिहरुलाई जोड्ने काम गर्दै आएको छ।

मध्य नेपालको पवित्र धाम देवघाटमा माघे सङ्क्रान्तिमा लाग्ने मेला, नवदुर्गामा मौलाकालिका मन्दिरमा लाग्ने मेला, चैत्राष्टमीमा विक्रमबाबा क्षेत्रमा लाग्ने मेलामा सक्रियरुपमा सहभागिता जनाउँदै आएको यस संस्थाको कार्यालय हाल भ.न.पा.-२ क्षेत्रपुरमा अवस्थित छ।

सम्पर्क कार्यालय चितवनको पहलमा भ.न.पा. ८ गौरीगञ्जमा आरती संचालन केन्द्र स्थापना भयो। हाल यो सम्पर्क कार्यालयको रुपमा संचालन भइरहेको छ। अहिले चितवनमा २ वटा आरती संचालन केन्द्र, मकवानपुर र पर्सामा सम्पर्क केन्द्रहरु (Contact Points) संचालित छन्। यस सम्पर्क कार्यालयको सम्पर्क फोन नं. ०५६-५२१३८५ रहेको छ।

दैनिकरुपमा आरती, जनसम्पर्क, पुस्तकालय, मन्त्रजप, ध्यानका गतिविधहरु संचालन भइरहेको यस सम्पर्क कार्यालयमा हरेक बिहीबार गुरु पूजन, हरेक २१ तारीख दिव्य गुरु महोत्सव सम्पन्न हुँदै आइरहेका छन् भने हालसम्म १ हजार ७ सय २५ जनाले आन्तरिक जनसम्पर्क, १ सय १२ जनाले आधारभूत तालिम तथा प्रशिक्षण कार्यक्रम, ७ समूहले प्रारम्भिक तान्त्रिक ध्यान लिने अवसर प्राप्त गर्नुभएको छ। २०५९ पौष २७ मा तान्त्रोक्त कुबेर साधनाबाट शुरु भएको साधना कार्यक्रमसमेत गरी अहिलेसम्म विभिन्न देवीदेवताहरुका २२ वटा तान्त्रोक्त साधना सम्पन्न भई हजारौं व्यक्तिहरुले साधना कार्यक्रममार्फत गुरुहरुसँग जोडिने, देवीदेवताहरुको कृपा, आशीर्वाद प्राप्त गर्ने अवसर प्राप्त गरिसक्नुभएको छ।

जय गुरुदेव !

# आह्वान हातेमालोको

## गोरक्ष निखिल वाणी ११ औं वर्षमा प्रवेश

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक गोरक्ष निखिल वाणी दसौँ वर्ष पूरा गरी एघारौँ वर्षमा पदार्पण गरेको छ । ०५६ भाद्रमा प्रकाशन आरम्भ गरेको यस पत्रिकाले एक दशक लामो यात्रालाई पार गरी यसै अङ्कदेखि एघारौँ वर्षमा प्रवेश गरेको छ । यस अवधिमा पत्रिकाले एउटा अङ्क पनि नटुटाई आफूलाई निरन्तररूपमा पाठकहरूको सेवा गर्ने सुवर्ण अवसर हात पार्‍यो भने गत वर्ष यस पत्रिकाले प्रेस काउन्सिलको पत्रिका वर्गीकरणमा 'क' श्रेणीमा पर्ने सफलता पनि पायो । आध्यात्मिक पत्रिका 'क' श्रेणीमा पर्न सफल भएको नेपालकै लागि यो पहिलो सुखद घटना हो ।

मन्त्र-तन्त्र-यन्त्र, ज्योतिष, आयुर्वेद, योग, ध्यान, सम्मोहन, समुद्रविज्ञान, सूर्यविज्ञान, रसायनविज्ञान, हस्तरेखाविज्ञान आदिजस्ता ऋषिमुनि, योगी, तपस्वीहरूको प्राचीन धरोहरलाई पाठकसमक्ष पस्कने पत्रिकाको टड्कारो अभावलाई महसुस गरी प्रकाशनको शुभारम्भ भएको यस पत्रिकाले परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ र परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चिन्तनलाई विस्तार गर्दै अगाडि बढिरहेको छ । विश्वमा आध्यात्मिक शीतलता छर्दै अगाडि बढिरहेको यस पत्रिकाले यस यात्रासम्म आइपुग्दा धेरै उतारचतावलाई पार गर्ने अवसर प्राप्त गर्‍यो भने ती सम्पूर्ण उतारचतावबाट यस पत्रिकाले परिस्कृत हुने अवसर पनि पायो । परमपूज्य सद्गुरुदेवहरूकै छत्रछायाँ पाएर यस

*यो पत्रिका असाध्यै राम्रो छ । लेखहरू प्रामाणिक छन् । यसका साथै गतिविधिका विवरणहरू पनि राम्रोसँग दिइएको छ । साजसज्जा पनि निकै राम्रा छन् । नेपालसम्बन्धी कुराहरू बारम्बार दिइन्छ र त्यसमा पनि बढी प्रामाणिक ढङ्गबाट दिइएको पाइन्छ । यो यसको अत्यन्त राम्रो पक्ष हो । यसो भएता पनि यसमा केही कमी-कमजोरी पनि देखिन्छन् । छोटकरीमा भन्नु पर्दा केही कुरा भनिन्छ–*

*यस पत्रिकाको भित्री पृष्ठमा आश्रमका गतिविधिहरू दिइन्छन् । एउटै पृष्ठमा १५-१५ वटा चित्र दिइएका हुनाले सबैलाई समेट्ने दृष्टिकोणले त यो राम्रो छ । यसो भएता पनि ज्यादै साना साना फोटा भएकाले ती फोटाहरू प्रष्ट देखिँदैन । बरु फोटाहरू राख्दा प्रष्ट भएको खण्डमा जसको फोटो छापियो उनीहरूका लागि र कालान्तरमा इतिहासको दृष्टिकोणले पनि उपयुक्त हुन्छ ।*

*यस पत्रिकाका प्रत्येक अङ्कमा संस्कृत श्लोकहरू दिइएका हुन्छन् । अरू धेरै पत्रिकाहरूको अनुपातमा यहाँ दिइएका संस्कृत श्लोकका उद्धरण बढी शुद्ध हुन्छन् तापनि पूर्णरूपले ती शुद्ध छैनन् । आगामी अङ्कहरूमा तिनलाई बढी शुद्धसँग प्रकाशन गर्नेतिर सम्पादक मण्डलको ध्यान जानु आवश्यक छ । अहिले हातमा परेको वि.सं. ०६६ श्रावणको अर्थात् पूर्णाङ्क १२० सामग्रीको दृष्टिकोणले राम्रो छ । यसमा नेपालको इतिहासमा श्री शिव गोरक्ष भन्ने शीर्षकमा गोरक्षनाथसम्बन्धी नेपालसँग इतिहास दिन खोजिएको छ । यसो भएता पनि त्यसमा कममा पनि लिच्छविकालदेखि पाइने श्री गोरक्षनाथको प्रामाणिक इतिहासलाई आदर्श योगी नामक सामान्य पुस्तकको उल्लेखबाट शुरु गर्दा खल्लो हुन गएको छ । वास्तवमा नेपालको प्रामाणिक इतिहासका दृष्टिकोणले चौथो शताब्दीको अन्तिम समयतिर नेपालमा बौद्ध राजा महिन्द्रदेव थिएनन् । यस्ता अनुश्रुतिलाई लिच्छविकालका प्रामाणिक राजा नरेन्द्रदेवका कुराहरू दिइएपछि अन्तिममा बढीमा अनुश्रुतिको रूपमा राख्न मिल्ने कुरा हुन् । त्यसैगरी त्यही पृष्ठमा द्रव्य शाहको समय वि.सं. १११२ भनी दिइएको पनि अशुद्ध हो । जयस्थिति मल्लको ने.सं. ४९९ (वि.सं. १४३) को ताम्रपत्रमा भनेर त्यही पृष्ठमा लेखिएको छ । ने.सं. र वि.सं. को अन्तर ९३६/९३७ हुने हुनाले यो मिल्दैन भन्ने पक्का छ । यस्ता केही सामान्य त्रुटि छोडेर यो पत्रिका राम्रो छ । छपाई चित्ताकर्षक छ, कागज पनि राम्रो छ । यो पत्रिका निरन्तर चल्दै जाओस् र यस क्षेत्रको अनुसन्धानको क्षेत्रमा यसले महत्त्वपूर्ण स्थान लिन सकोस् भन्ने शुभकामना प्रकट गर्दछु ।*

*–प्रा. दिनेशराज पन्त, वाल्मीकि विद्यापीठ*

पत्रिकाले आफूलाई पाठकसामु चिनाउन सफल भयो भने पाठकहरूकै माया, ममता, उत्साह, सहयोग पाएर यस पत्रिका आज घर-घरका लागि पढ्नै पर्ने पत्रिका बन्न सफल भएको छ ।

सङ्ख्यात्मकरूपमा यस पत्रिकाको स्थायी सदस्य सङ्ख्या भनेको २५ हजारभन्दा बढी छ । तर हामी यसलाई लाखौंको सङ्ख्या मान्न अलिकति पनि हिचकिचाउँदैनौं किनकि यो पत्रिका यस्तो पत्रिका हो जसलाई घर परिवारमात्र नभई स्वजन मित्रजनसमेतले पढ्ने गर्नुहुन्छ । एउटा ग्राहकको घरमा पत्रिका पुग्दा कम्तीमा ५ देखि १५ जनासम्मले यसको अध्ययन गर्ने गरेको पाइएको छ । यसको अध्ययनबाट मानिसको चारित्रिक उत्थान हुन्छ, सत्यको ज्ञान हुन्छ जसबाट मानिसको हेराइ बदलिन्छ, उसको संसारलाई हेर्ने दृष्टिकोण बदलिन्छ, उसको दिशा बदलिन जान्छ, यो दिशा पर्याप्त छ– उसको आफ्नै रूपान्तरणका लागि, उसको परिवारको रूपान्तरणका लागि र समाजको रूपान्तरणका लागि ।

मानिसले आफ्नो 'स्व'लाई नचिनेसम्म उसको रूपान्तरण पनि सम्भव छैन र उसले आफ्नो गन्तव्य पनि ठम्याउन सक्दैन । आफ्नो 'स्व'को ज्ञान भएपछि मात्र मानिसलाई आफ्नो कर्तव्यको बोध हुन्छ अर्थात् 'कैवल्य पद' नै आफ्नो लक्ष्य हो भन्ने ठहर मानिसलाई हुन पुग्दछ । आफ्नो 'स्व'मा बसेर, आफूलाई द्रष्टा मानेर, निमित्त मानेर संसार सागरमा रमाउनु र अन्यलाई पनि यही बाटोमा डोऱ्याउने चारित्रिक व्यक्तिहरूको ठूलो जमातको निर्माण हुनु नितान्त आवश्यक छ । चारित्रिक

*म गोरक्ष निखिल वाणी पत्रिकाको नियमित पाठक हुन थालेको केही वर्ष मात्रै भएको छ । यो पत्रिका मैले पहिलोपटक २०६१ सालमा प्राप्त गरेपछि करिब नियमितरूपमै अध्ययन गर्दै आइरहेको छु । पुराना अङ्कहरू पनि सकेसम्म र मिलेसम्म पढ्ने प्रयास गरिरहेको छु । यस पत्रिका हात परेपछि प्रत्येक सामग्रीहरूलाई नछुटाइकन पढ्ने प्रयास गरेको छु । नेपालकै अतुलनीय आध्यात्मिक पत्रिकाको धारमा रहेको यस पत्रिका एउटा पाठकको दृष्टिकोणबाट मूल्यांकन गर्दा यसको निरन्तरता र यसको स्तरीयता नै खुशीको विषय बनेको छ ।*

*मेरो आफ्नो विचारमा पहिलेका अङ्कहरूमा झैं विभिन्न धर्म, महापुरुषहरूका रोचक प्रसङ्गहरू एवं समाजमा आध्यात्मिक यात्रामा लागेका थुप्रै व्यक्ति-व्यक्तित्वहरूका लेखहरू र अन्तर्वार्ताहरू पनि समावेश गरिएको भए अझै बढी पाठकहरूलाई आकर्षण गर्न सकिन्थ्यो । एउटा आध्यात्मिक अनुसन्धानमूलक पत्रिकाको नाताले कुनै विशिष्ट धर्मका विषयवस्तुभन्दा माथि उठेर सबैलाई समेट्न सकिने गरी समय समयमा अरू धर्म, संस्कृतिका व्यवहारिक पक्षलाई अनुसन्धान गर्दै केही खुराक पत्रिकामार्फत् प्रकाशित गर्दै अगाडि बढ्नुपर्ने जस्तो लाग्छ ।*

*–शिव लामिछाने, त्रि.वि.वि. कीर्तिपुर ।*

*सर्वप्रथम यस आध्यात्मिक मासिक पत्रिका पढ्न पाउँदा खुशी लागेको छ । यसबाट सद्गुरुदेवहरूसँग जोडिने अवसर प्राप्त भएको छ । यस पत्रिकामा नयाँ-नयाँ आध्यात्मिक ज्ञानहरू सरल ढङ्गबाट सहज तरीकाले प्रकाशित भइदिएमा हामीजस्ता नयाँ पाठकहरूलाई गुरु मार्गमा प्रेरित हुनको लागि सहयोग मिल्नेछ ।*

*–विजय मानन्धर, चाबहिल*

*आध्यात्मिक अनुसन्धानमूलक मासिक एकदमै उच्चस्तरीय लाग्छ । यसका हरेक विषयहरू उत्कृष्ट छन्, साथै ज्ञानवर्द्धक छन् । सद्गुरुदेवहरूसँग कसरी जोडिन सकिन्छ, साधना, ध्यान इत्यादि गर्दा कसरी गुरु प्राप्त हुन्छ, गुरु मार्गमा लाग्दा कसरी उच्चता प्राप्त गर्न सकिन्छ आदि विषय क्रमशः प्रकाशित हुँदै गएमा आश्रममा नयाँ प्रवेश गर्नेहरूका लागि अझ राम्रो हुने थियो ।*

*–मुकुन्द आचार्य, बौद्ध, सिमलटार–६*

**आदरणिय पाठकवृन्द ! यदि यहाँहरुसँग पनि आध्यात्मिक शक्ति अनुसन्धान मूलक मासिक 'गोरक्ष निखिल वाणी' मा प्रकाशित लेखहरुको सम्बन्धमा कुनै जिज्ञासा, गुनासो, सल्लाह-सुझाव आदि छन् भने कृपया हामीलाई प्रतिक्रिया दिनुहोला । हामीलाई पत्र लेख्ने ठेगाना यसप्रकार छ– गोरक्ष निखिल वाणी, पो.व.नं. १०५११, काठमाडौँ, नेपाल । यसैगरी हामीलाई इमेलबाट info@gnv.org.np मा पनि सम्पर्क राख्न सक्नुहुन्छ । यहाँको सल्लाह, सुझाव, गुनासाहरु हाम्रा लागि महत्त्वपूर्ण हुनेछन् । साथै अनुभव अनुभूति, कविता, मठमन्दिरका सम्बन्धमा प्रामाणिक लेख, धर्म, अध्यात्म आदि सम्बन्धमा कुनै मौलिक लेख रचना आदि छन् भने पनि पठाउन नभुल्नुहोला ।**

व्यक्तित्व निर्माणको यस पुनीत कार्यमा यो पत्रिका प्रारम्भदेखि लागिरहेको छ, भविष्यमा पनि यसले आफ्नो यस अविरल यात्रालाई जारी राख्नेछ ।

यस यात्रामा हामीसँगसँगै हिँड्ने ती लाखौं साधक-साधिका, शुभ-चिन्तक, विज्ञापनदाता, लेख-रचना प्रदाता, जिज्ञासु पाठकवृन्दलाई हामी मुरीमुरी धन्यवाद दिँदै 'जय गुरुदेव !' को अभिवादन गर्दछौं । उहाँहरू सबैको सहयोग र शुभेच्छाले यस पत्रिकाले आज यस रूपमा पाठकहरू सामु प्रस्तुत हुने शुभ-अवसर पाइरहेको छ । यसमा सबैको भूमिका स्तुत्य छ, सबैको भूमिका अतुलनीय छ । भविष्यमा पनि सबैको भूमिका अटुट रहनेछ र यसले आफ्नो यात्रालाई सफलतापूर्वक पार गर्नेछ भन्नेमा पनि हामी विश्वस्त छौं ।

पत्रिका निस्कनु मात्र ठूलो कुरा होइन । प्रमुख कुरा त पत्रिकाले पाठकलाई 'के दिन सकेको छ ?' भन्ने हुन्छ । पत्रिकाले व्यक्तिको जीवनमा आमूल परिवर्तन ल्याउन सक्यो, व्यक्तिलाई आफ्नो अभीष्ट प्राप्तिका लागि झक्झक्याउन सक्यो भने एउटा आध्यात्मिक पत्रिकाले आफ्नो धर्म निर्वाह गरेको मानिन्छ । गुणात्मकरूपमा यसले आफ्ना पाठकहरूको कल्याण गर्न सक्नुमा नै यसको सफलता प्रतिविम्बित भएको हुन्छ । यस अवधारणालाई आत्मसात् गरी धेरैभन्दा धेरै पाठकहरूलाई आफ्नो लक्ष्य चिनाउने, त्यतातिर डोऱ्याउने, त्यस लक्ष्यमा अडिग राख्ने शुभकार्यमा यो पत्रिका लागिरहेको छ र भविष्यमा पनि लागिरहने नै छ । यस शुभकार्यमा सबैलाई हातेमालो गर्न आह्वान गर्दछौं । जय गुरुदेव !

*गोरक्ष निखिल वाणीको एउटा नियमित पाठकको हैसियतले यस पत्रिकाको उत्तरोत्तर प्रगतिको कामना गर्दछु । धर्म, संस्कृति र यसमा आएको निरन्तर परिवर्तन र परम्परा सबैलाई पत्रिकाले समेटेर प्रकाशन गर्न सकेकोमा अधिकांश पाठकहरूले यसलाई रुचाएका छन् । स्रोत खुलाएर सामग्रीको प्रस्तुतिकरण हुन सके झनै सुनमा सुगन्ध हुने कुरा पनि मननीय छ ।*

*विगत केही वर्षदेखि एउटा निश्चित विषयमा केन्द्रित रहेर विशेषांक निकाल्नाले त्यस विषयबाट विभिन्न क्षेत्रका पाठकहरू लाभान्वित भएका छन् । धर्म, दर्शन, वास्तुशास्त्र आदिजस्ता संवेदनशील विषयमा निरन्तर कुनै पत्रिका निस्कनु भनेको चुनौतीपूर्ण कार्य हो । त्यो कार्य सफलतापूर्वक गर्न सकेकोमा पत्रिका व्यवस्थापनसँग सम्बन्धित सबै नै धन्यवादका पात्र भएका छन् ।*

*आगामी अङ्कहरू पनि स्तरीय र विवादरहितरूपमा यहाँबाट प्रकाशित हुनेछन् भन्ने आशा गरेकी छु ।*

*–प्रा. डा. वीणा पौडेल, त्रिभुवन विश्वविद्यालय*

# भूल सुधार

**गतांकको पेज नं. ११ मा 'नेपालको इतिहासमा श्री शिव गोरक्ष' शीर्षकको लेखमा प्राविधिक कारणबस ६ अंक छुट्न गई मितिहरूमा त्रुटि हुन गएकोमा निम्नानुसार भूल सुधार गरिएको छ । 'इतिहास अनुसार द्रव्य शाह (१६१६–१६२६)' हुनुपर्नेमा (१ १ –१ २ ) भएको, 'शक संवत् ४६९ अर्थात् वि.सं.६०४ रामदेवको पालाको पशुपति मृगस्थली शिवलिङ्ग अभिलेख' हुनुपर्नेमा 'शक संवत् ४ ९ अर्थात् वि.सं. ०४' भएको, 'जयस्थिति मल्लको ने.सं.४९९ (वि.सं.१४३६) को ताम्रपत्र' हुनुपर्नेमा (वि.सं.१४३ ) भएकोमा सच्याइएको छ । –पत्रिका व्यवस्थापन समिति**

# नवरात्रिमा माता दुर्गाको पूजन गरौँ

प्रातः स्नान आदिबाट निवृत्त भएर नवरात्रिको प्रथम दिन शुभ-मुहूर्तमा पहिला नै शुद्ध गरिएको पूजा स्थानमा पहेँलो आसन ओछ्याएर पूर्व वा उत्तरतिर फर्किएर बस्नुहोस् । अगाडि पिर्कामाथि रातो कपडा बिछ्याउनुस् र त्यसमाथि भगवतीको एउटा आकर्षक फोटो स्थापित गर्नुहोस् । पूजा गर्नुभन्दा अगाडि पूजाका सबै सामानहरू आफ्नो अगाडि ठीक पारेर राख्नुहोला ।

**पूजन सामग्री**

रातो कपडा, धूप, दीप, पुष्प, फल, कलश, मिठाई, पञ्चामृत, नरिवल, कपडा, दुर्गा यंत्र, नौवटा सिंगो सुपारी दानाहरू, वैदूर्य (एक प्रकारको रत्न) र हकीक माला ।

यसपछि दुर्गा पूजन आरम्भ गर्नुहोस् ।

सबभन्दा पहिला तीनपटक आचमन गरेर हात धुनुहोस् ।

**पवित्रीकरण**

**ॐ अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपि वा ।**
**यः स्मरेत् पुण्डरीकाक्षं स बाह्याभ्यन्तरः शुचिः ।**

यस मंत्रलाई पढेर आफूलाई र पूजन सामग्रीहरूलाई पनि जल छर्केर पवित्र पार्नुहोस् । आफ्नो दाहिनेतिर धूप र दीप बाल्नुहोस् । दीपलाई कुंकुम र अक्षताले पूजा गर्नुहोस् ।

**संकल्प**

दाहिने हातमा जल लिएर त्यसमा कुंकुम, अक्षता र पुष्प मिलाएर निम्न मंत्र पढ्नुहोस्–

**ॐ विष्णुर्विष्णुर्विष्णुः श्रीमद्भगवतो महापुरुषस्य ब्रह्मणोऽह्नि द्वितीये परार्द्धे श्वेतवाराहकल्पे जम्बूद्वीपे भारतखण्डे ..... तिथौ ...वासरे ..... गोत्रोत्पन्नः सकल सिद्धि प्राप्ति निमितं सुख सौभागय धन धान्य प्राप्तये गणपति पूजनं दुर्गा पूजनं च अहं करिष्ये** । जललाई भूमिमा छोडौं ।

**गणपति पूजन**

दुवै हात जोडेर गणपतिलाई स्मरण गरौं–

**ॐ खर्वं स्थूलतनुं गजेन्द्रवदनं लम्बोदरं सुन्दरं,**
**प्रस्यन्दन्मद गन्धलुब्ध मधुप व्यालोल गण्डस्थलम् ॥**
**दन्ताघात विदारितारिरुधिरैः सिन्दूर शोभाकरं,**
**वन्दे शैलसुतं गणपतिं सिद्धिप्रदं कामदम् ॥**
**भो गणपते इह आगच्छ इह तिष्ठ स्थिरो भव ।**

गणपतिको लागि एउटा पुष्पको आसन दिऔं ।

**गं गणपतये नमः स्नानं समर्पयामि**
**वस्त्रं समर्पयामि नमः ।**
**तिलकं, अक्षतान्, पुष्पाणि समर्पयामि नमः ॥**
**नैवेद्यं निवेदयामि नमः ॥**

दुवै हात जोडेर प्रार्थना गरौं–

**ॐ गजाननं भूत गणाधिसेवितं,**
**कपित्थ जम्बू फल चारु भक्षणम् ।**
**उमासुतं शोक विनाशकारकं,**
**नमामि विघ्नेश्वर पाद पंकजम् ॥**

**गुरू पूजन**

गुरुको ध्यान गरौं–

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥**

गुरुको पञ्चोपचारबाट श्रद्धापूर्वक पूजन सम्पन्न गरौं ।

**कलश स्थापना**

यसपछि कुंकुमबाट रङ्गिएको अक्षताबाट आफ्नो बायाँपट्टि

# आफ्नो अधिकार प्रयोग गर्दा अरूको अधिकारप्रति सजग र सचेत हुनु असल नागरिकको कर्तव्य हो ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

भूमिमा 'स्वस्तिक' बनाएर त्यसमाथि कलशमा जल भरेर स्थापित गरौँ, कलशको चारैतिर चार टीका लगाऔँ । त्यसमाथि नरिवल राखौँ। अक्षता तथा पुष्प कलशमा चढाऔँ। फेरि दुवै हात जोडेर वरुण देवताको आवाहन गरौँ–

**वरुणः पाशभृत् सौम्यः प्रतीच्यां मकराश्रयः ।**
**पाशहस्तात्मको देवो जलराश्याधिको महान् ॥**

दुर्गा चित्रको सामु एउटा आसनमा 'दुर्गा यंत्र'लाई स्थापित गरौँ। त्यसको चारैतर्फ नौवटा सिंगो सुपारीलाई पनि स्थापित गरौँ। यसको सामु तोरीको थुप्रोमा 'वैदूर्य'को स्थापना गरौँ। यंत्र तथा वैदूर्यलाई कुंकुम, अक्षता तथा पुष्पबाट पूजन गरौँ। पुनः षोडशोपचारबाट भगवतीको पूजन गरौँ ।

### ध्यान

**दुर्गे स्मृता हरसि भीतिमशेष जन्तोः ।**
**स्वस्थैः स्मृता मति मतीव शुभां ददासि ॥**
**दारिद्रय दुःख भयहारिणी का त्वदन्या ।**
**सर्वोपकारकरणाय सदार्द्रचित्ता ॥**

### आवाहन

एउटा पुष्प चढाऔँ र निम्न सन्दर्भको उच्चारण गरौँ–

**ॐ आगच्छेह महादेवि ! सर्वसम्पत्प्रदायिनि ! ।**
**यावद्व्रतं समाप्येत तावत्त्वं सन्निधौ भव ॥**

### आसन

पुष्पको आसन दिऔँ र निम्न मंत्रको उच्चारण गरौँ–

**अनेक रत्न संयुक्तं नानामणिगणान्वितम् ।**
**कार्तस्वरमयं दिव्यं आसनं प्रतिगृह्यताम् ॥**

### पाद्य

जल चढाऔँ-

**गंगादि सर्व तीर्थेभ्यो मया प्रार्थनयाहृतम् ।**
**तोयमेतत्सुखस्पर्श पाद्यार्थं प्रतिगृह्यताम् ॥**

### अर्घ्य

अर्घ्यको जल चढाऔँ-

**निधीनां सर्व रत्नानां त्वमनर्घ्यगुणान्विता ।**
**सिंहोपरिस्थिते देवि ! गृहाणार्घ्यं नमोऽस्तुते ॥**

### आचमन

तीनपटक आचमनीबाट जल चढाऔँ–

**कर्पूरेण सुगन्धेन सुरभि स्वादु शीतलम् ।**
**तोयमाचमनीयार्थं देवि ! त्वं प्रतिगृह्यताम् ॥**

### स्नान

आचमनीबाट भगवतीलाई जल चढाऔँ–

**मन्दाकिन्याः समानीतैर्हमांभोरुहवासितैः ।**
**स्नानं कुरुष्व देवेशि ! सलिलैश्च सुगन्धिभिः ॥**

### पञ्चामृत स्नान

दूध, दही, घ्यू, मह र चिनी मिलाएर स्नान गराऔँ–

**पयो दधि घृतं चैव मधु च शर्करान्वितम् ।**
**पंचामृतं मयानीतं स्नानार्थं प्रतिगृह्यताम् ॥**

यसपछि शुद्ध जलले स्नान गराएर वस्त्रद्वारा पुछौँ ।

### वस्त्र

दुईवटा वस्त्र भगवतीलाई चढाऔँ–

**पट्टकूलयुगं देवि ! कंचुकेन समन्वितम् ।**
**परिधेहि कृपां कृत्वा दुर्गे ! दुर्गतिनाशिनि ॥**

### चन्दन

कुंकुम, चन्दन वा केशरी लेपन गरौँ–

**श्रीखण्डचन्दनंदिव्यं गन्धाढ्यं सुमनोहरम् ।**
**विलेपनं च देवेशि ! चन्दनं प्रतिगृह्यताम् ॥**

### अक्षत

**अक्षतान्निर्मलान् शुद्धान् मुक्तामणिसमन्वितान् ।**
**गृहाणेमान्महादेवि ! देहि मे निर्मलां धियम् ॥**

### माला

यसपछि सुन्दर फूलबाट बनेको माला चढाऔँ–

**मन्दारपारिजातादि पाटली केतकानि च ।**
**जाती चम्पक पुष्पाणि गृहाणेमानि शोभने ! ॥**

धूप र दीप देखाएर नैवेद्य अर्पित गरौँ–

**अन्नं चतुर्विधं स्वादु रसैः षड्भिः समन्वितम् ।**
**नैवेद्यं गृह्यतां देवि ! भक्तिं मे ह्यचलां कुरु ॥**

तीन आचमनी जल आचमनका लागि प्रदान गरौँ तथा फल अर्पित गरौँ। फेरि मुख शुद्धिका लागि आचमन गरौँ– ल्वाङ्ग र अलैँचीले युक्त स्वादिलो पान अर्पित गरौँ ।

### दक्षिणा

पूजाको पूर्णताको लागि केही द्रव्य अर्पण गरौँ–

**पूजाफलसमृध्यर्थं तवाग्रे स्वर्णमीश्वरि ! ।**
**स्थापिता तेन मे प्रीता पूर्णान्कुरु मनोरथान् ॥**

अब हकीक मालाबाट निम्न मंत्रको तीन माला मंत्र जप गरौँ–

**॥ हूं ऐं ऐं ह्रीं चामुण्डायै नमः ॥**

यसपछि आरती सम्पन्न गरौँ र दुवै हातमा पुष्प लिएर भगवतीलाई चढाऔँ। प्रणाम गरेर परिवारसहित प्रसाद ग्रहण गरौँ । समाप्तिको दिन यंत्रलाई घरको पूजा गर्ने ठाउँमा स्थापित गरेर र अन्य सामग्रीलाई नदीमा विसर्जन गरिदिने र उक्त मंत्रको १ माला नित्य जप गर्न सकिने छ ।

जय गुरुदेव !

# भाद्र महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो । यस अंकमा भाद्र महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला ।**

## भाद्र महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : व्यापार कार्यका लागि यो समयको छनौट विशेष शुभ रहन्छ, यस समयकी अधिष्ठात्री 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : यात्रा, जुवा, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ । यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दही खानु शुभ मानिएको छ ।

११ देखि १५ मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ । यस समयका देवता 'सूर्य' हुन्, सख्खर खाएर यात्रा अथवा कार्य प्रारम्भ गर्नुपर्दछ ।

१६ देखि २० मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय प्रसङ्ग, विवाह तथा यात्रा आदिका लागि यस समयलाई छनौट गर्नुपर्दछ । यस समयका देवता 'गौतम' हुन्, पान चपाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, शुभ कार्य, कुरा छिन्ने, विवाह, माङ्गलिक कार्य, व्यापारिक कार्य, जुवा आदिका लागि यो समय अनुकूल र शुभ छ । यस समयका देवता 'चन्द्र' हुन्, दही खानु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : भाग्योदय, चुनाव, परीक्षा दिने, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, किनमेल र शुभ कार्यका लागि यो समय अनुकूल छ । यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

३६ देखि ४० मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका अधिष्ठात्रा 'मरुत' हुन्, तिल खानु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्राको दृष्टिबाट यस समयको विशेष महत्त्व छ, यस समयका अधिष्ठाता 'गणेश' हुन् । अत: गणेशको स्मरण गरेर यात्रा प्रारम्भ गर्नुपर्दछ । दूबो चपाउनु शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ । यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुपूर्व धनियाँ खानु अनुकूल रहन्छ ।

५१ देखि ५५ मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गरियो भने विशेष शुभ रहन्छ ।

५६ देखि ६० मिनेटसम्म : कुनै पनि प्रकारको उन्नति, व्यापार, जागिर, यात्रा आदिका लागि यस समयलाई छनौट गर्नु शुभ मानिएको छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, हरिद्रा खानु शुभ मानिएको छ ।

## भाद्र महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : विवाह, कुरा छिन्ने आदिका लागि प्रस्थान, अन्तर्वार्ता, मुद्दा मामिला आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'हनुमान्' हुन्, सख्खर भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

६ देखि १० मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान खानु शुभ मानिएको छ ।

११ देखि १५ मिनेटसम्म : स्थायी कार्य, व्यापार, उन्नति तथा यात्रादिका लागि शुभ समय छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, दूबो चपाउनु शुभ रहन्छ ।

१६ देखि २० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ । यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी

# चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण महिनामा पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-६:४८दिन | महेन्द्र | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन | वक्र | ६:००-८:२४दिन | अमृत | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | शून्य |
| ६:४८-१०:०० | अमृत | ७:३६-१०:४८<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ८:२४-९:१२ | शून्य | ७:३६-९:१२ | अमृत | ८:२४-९:१२ | शून्य | ६:४८-१:१२<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-८:२४ | वक्र |
| १०:००-२:०० | वक्र | १०:४८-१:१२ | अमृत | ९:१२-१०:०० | वक्र | ९:१२-११:३६ | वक्र | ९:१२-१०:४८ | शून्य | १:१२-४:२४ | वक्र | ८:२४-९:१२<br>*९:००-१०:३०* | शुन्य<br>*राहु* |
| २:००-५:१२<br>*४:३०-६:००* | शून्य<br>*राहु* | १:१२-३:३६ | वक्र | १०:००-१२:२४ | अमृत | ११:३६-१:१२<br>*१२:००-१:३०* | अमृत<br>*राहु* | १०:४८-१:१२ | अमृत | ४:२४-५:१२ | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| ५:१२-६:००<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ३:३६-५:१२ | अमृत | १२:२४-३:३६<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:००<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-४:२४<br>*१:३०-३:००* | वक्र<br>*राहु* | ५:१२-६:०० | शून्य | १२:२४-१:१२ | शुन्य |
| ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ३:३६-५:१२<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:००-३:३६ | वक्र | ४:२४-६:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | १:१२-२:०० | वक्र |
| ६:४८-७:३६ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | शून्य | ३:३६-४:२४ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ७:३६-८:२४ | शून्य | २:००-३:३६ | शून्य |
| ७:३६-८:२४ | शून्य | ७:३६-९:१२ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ४:२४-६:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ८:२४-१०:४८ | अमृत | ३:३६-५:१२ | अमृत |
| ८:२४-१०:०० | अमृत | ९:१२-१०:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ९:१२-१०:०० | अमृत | १०:४८-१:१२ | वक्र | ५:१२-६:०० | शून्य |
| १०:००-१०:४८ | शून्य | १०:००-१:१२ | वक्र | ९:१२-१०:०० | अमृत | ६:४८-९:१२ | अमृत | १०:००-१:१२ | वक्र | १:१२-३:३६ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र |
| १०:४८-१:१२ | वक्र | १:१२-२:४८ | अमृत | १०:००-१२:२४ | वक्र | ९:१२-१०:४८ | महेन्द्र | १:१२-२:४८ | अमृत | ३:३६-४:२४ | शून्य | ८:२४-१०:४८ | अमृत |
| १:१२-३:३६ | शून्य | २:४८-४:२४ | शून्य | १२:२४-२:०० | अमृत | १०:४८-१२:२४ | वक्र | २:४८-४:२४ | शून्य | ४:२४-६:०० | अमृत | १०:४८-१२:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ४:२४-५:१२ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:०० | शून्य | ४:२४-६:०० | अमृत | | | १२:२४-२:०० | शून्य |
| ४:२४-६:०० | अमृत | ५:१२-६:०० | शून्य | २:४८-३:३६ | वक्र | २:००-६:०० | अमृत | | | | | २:००-३:३६ | अमृत |
| | | | | ३:३६-४:२४ | महेन्द्र | | | | | | | ३:३६-४:२४ | शून्य |
| | | | | ४:२४-६:०० | अमृत | | | | | | | ४:२४-६:०० | अमृत |

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) द्वारा रचित *'ज्योतिष और काल निर्णय'* पुस्तकमा आधारित ।

**महेन्द्रकाल- सर्वश्रेष्ठ, अमृतकाल- श्रेष्ठ, वक्रकाल- सामान्य, शून्यकाल- निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैं अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ श्रावण २५ गते आइतबार बिहान ७:५५ बजेको सूक्ष्म विवेचना गरौं । आइतबार प्रात: ६:४८ देखि १०:०० बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:५५ बाट हाम्रो काल शुरु भएको समय ६:४८ घटाऔं । बाँकी रह्यो १:०७ अर्थात् १ घण्टा ७ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- ७ मिनेट । त्यसपछि चैत्र महिनाको अमृतकालमा ७ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **६ देखि १० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ । यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

कार्य, व्यापार प्रारम्भ मुहूर्त आदिका लागि यस समयको छनौट शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

२६ देखि ३० मिनेटसम्म : जुवा, व्यापार, यात्रा आदिका लागि समय उपयुक्त छ । यस समयका देव 'शनि' हुन्, तिल खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : परीक्षा, चुनाव, अन्तर्वार्ता तथा यात्रा आदिका लागि समय शुभ छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही खाँदा शुभ हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : कुनै पनि व्यापार कार्यका लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ । यसका देवता 'गणपति' हुन्, सख्खरको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस समयकी अधिष्ठात्री देवी 'सरस्वती' हुन्, मुगीको दाना चबाएर यात्रा प्रारम्भ गर्नु शुभ रहन्छ ।

५१ देखि ५५ मिनेटसम्म : जुवा, व्यापार प्रारम्भ गर्न, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो शुभ समय हो । यसका देवता 'विष्णु' हुन्, चिनी खानु शुभ हुन्छ ।

५६ देखि ६० मिनेटसम्म : जुवा, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठान आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'शिव' हुन्, चामलको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

## भाद्र महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : यात्रा आदिका लागि विशेष अनुकूल छ । यसका प्रधान देव 'गणपति' हुन्, सख्खरको प्रयोग शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : जुवा, दौड, सिनेमा, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन् । मीठो पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

११ देखि १५ मिनेटसम्म : यात्राका लागि केही बाधकारक तर अन्त्यमा ठीक । यसका प्रधान देव 'अग्नि' हुन्, तोरी चपाएर कार्य गर्दा उत्तम रहन्छ ।

१६ देखि २० मिनेटसम्म : व्यापारादि कार्यहरूका लागि यो शुभ समय छ । यसका प्रधान देव 'गुरु' हुन्, बेसनको प्रयोग शुभ मानिएको छ ।

२१ देखि २५ मिनेटसम्म : प्रेम, वाद्य, जुवा आदिको लागि शुभ समय छ । यसका प्रधान देव 'पुष्पधन्वा' हुन्, मह खाँदा शुभ हुन्छ ।

२६ देखि ३० मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल । यसका प्रधान देव 'चन्द्रमा' हुन्, दही खानु शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत' यसका देव हुन् । सख्खर खाएर जाँदा राम्रो हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : जासूसी, भेद ज्ञात गर्ने, सामुन्ने भएको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यसका प्रधान देव 'वात' हुन्, चामल खाएर जानुहोस् ।

४१ देखि ४५ मिनेटसम्म : मित्रता बढाउन, अधिकार प्राप्त गर्न, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'सूर्य' हुन्, जीराको प्रयोग गरियो भने विशेष अनुकूल रहन्छ ।

४६ देखि ५० मिनेटसम्म : जुवा खेल्नको लागि उपयुक्त समय । यसका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुहोस् ।

५१ देखि ५५ मिनेटसम्म : प्रेम प्रदर्शन, प्रणय आदिका लागि यस समयको छनौट ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह खाएर जानुहोस् ।

५६ देखि ६० मिनेटसम्म : व्यापार आदिका लागि अपेक्षाकृत ठीक छ । प्रारम्भमा विलम्ब र पछि सिद्धि । यसका प्रधान देव 'गरुड' हुन्, हरिद्रा खाएर कार्य प्रारम्भ गरियो भने शुभ रहन्छ ।

## भाद्र महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं तनावपूर्ण, तर पनि 'गणपति'लाई स्मरण गरेर र सख्खर खाएर कार्य प्रारम्भ गरिन्छ भने शुभ ।

६ देखि १० मिनेटसम्म : प्रणय प्रसङ्ग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । 'शुक्राचार्य'को स्मरण

गर्नुहोस् र फल खाएर जानुहोस् ।

११ देखि १५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक । 'हिडिम्बा'को ध्यान गर्नुहोस् । घिउको भक्षण शुभ ।

१६ देखि २० मिनेटसम्म : कार्यको प्रारम्भमा तनावहरू, तर पछि स्थितिमा सुधार, प्रधान देव 'अग्नि'को स्मरण र तिल खानु शुभ ।

२१ देखि २५ मिनेटसम्म : जुवा, मद्य, घोडा दौड, सौन्दर्य प्रसाधन सामग्री बिक्री, व्यापार आदिको लागि अनुकूल । प्रधान देवता 'विश्वकर्मा' हुनुहुन्छ, सख्खर र घिउ खानु शुभ ।

२६ देखि ३० मिनेटसम्म: बाधाकारक समय, तर मुद्दा मामिला आदिका लागि शुभ । 'हनुमान्'लाई स्मरण गरेर, सख्खर, घिउ खाएर जाँदा भने अनुकूल ।

३१ देखि ३५ मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल । प्रधान देवता 'मकरध्वज'को स्मरण गर्नुहोस् । तोरी खानु शुभ ।

३६ देखि ४० मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, 'चित्रगुप्त'लाई स्मरण गर्नुहोस् तथा फूल चपाएर कार्य प्रारम्भ गरियो भने केही अनुकूलता ।

४१ देखि ४५ मिनेटसम्म : प्रत्येक कार्य अथवा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । तर पनि 'लक्ष्मी'लाई स्मरण गर्नुहोस् । चामल चपाउनु शुभ ।

४६ देखि ५० मिनेटसम्म : प्रत्येक कार्यका लागि व्यवधानपूर्ण, तर 'गौरी'लाई स्मरण गरेर र दही खाएर कार्य प्रारम्भ गर्दा केही अनुकूलता ।

५१ देखि ५५ मिनेटसम्म : जुवा खेल्नका लागि शुभ, यस समयका देवता 'काल' हुन्, मह खाएर गइयो भने अनुकूल ।

५६ देखि ६० मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल, प्रधान देवता 'ब्रह्मा'लाई स्मरण गर्नुहोस्, र दही भक्षण शुभ ।

जय गुरुदेव !

# दृढ आत्मविश्वासको
# अपत्यारिलो सत्य

मानव जीवनको प्राप्ति अत्युत्तम लाभ, पूर्णता र सफलताको लागि भएको हो। त्यसैले त गुरु सत्ताको विशाल समुद्रमा एकाकार हुन सक्नु नै जीवनको उपलब्धि मानिन्छ। मानिस जन्मँदा नै ईश्वरीय शक्ति बराबरी लिएर यस धर्तीमा आएको हुन्छ। त्यसको उपयोग गर्नु, नगर्नु त व्यक्ति स्वयंको हातमा छ । मानव स्वभावैले अन्य प्राणीभन्दा फरक छ । खाने, सुत्ने, मैथुन गर्ने र सांसारिक भोगविलासमा रहने कार्य त पशुले पनि गर्दछ। त्यसैले त्यसभन्दा माथि उठी जीवनको मूल्य बुझ्नु नै गुरुधर्म हो । सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पा तथा आशीर्वादस्वरूप गुरु प्राप्तिको बाटोमा हिँड्दै गोरक्ष निखिल शक्ति (गोनि शक्ति) को साथ पाउनु सम्पूर्ण मानवताको लागि सौभाग्यको विषय बनेको छ ।

मानव जीवनलाई धन्य बनाउन वास्तविक गुरु प्राप्तिको साँचोको खोजमा हामी दौडिरहेका छौं। यस दौडमा प्रथमत: हामीले आफ्नै खोज गर्नुपर्ने आवश्यकता छ । म को हुँ ? के को लागि ? कहाँबाट कहाँसम्म ? भन्ने प्रश्नको उत्तर आफैभित्र खोज्नु अनिवार्य छ । अनि मात्र गुरु प्राप्तिको प्रवेशद्वार हामी आफैभित्र प्राप्त गर्न सक्दछौं । अनि त्यो प्रवेशद्वाररूपी साँचोले खोल्दछ जीवनको वास्तविक विराट् स्वरूप र गुरु सत्ताको मार्ग। यसको स्पर्श र रसास्वादनको मादकताले हामी धन्यधन्य हुनेछौं । के हो त त्यो रहस्यमय साँचो जसको शक्तिले हामी गुरु सत्तासँग खिँचिँदै जीवनको परमानन्दमा भुल्दछौं ? त्यो शक्तिमय रहस्यात्मक साँचो हामीभित्रै लुकेर बसेको छ। आवश्यकता छ त्यसको खोजी गरी क्षमता वृद्धि गर्ने ।

गुरु प्राप्तिको लागि आत्मनिरीक्षण वा स्वयंको अध्ययन गरी यो थाहा पाउन आवश्यक छ कि हामी जीवनको कुन विन्दुमा पुगेका छौं ? गुरुको लागि एकचित्त भावमा रही कति समय खर्चेका छौं ? कति ध्यान साधनामा डुबेका छौं ? गुरु कार्य, ध्यान र साधनाको लागि औपचारिकता मात्रै अपनाएका त छैनौं ? हामी देखावटी छौं कि साँच्चै आत्मैदेखि गुरुभावमा लीन भइरहेका छौं ? अब बेला आएको छ आत्मनिरीक्षणको। आफैलाई नियालेर हेरौं कि मेरो जप, तप र ध्यानले के मलाई प्रसन्न र आत्मविश्वासी बनाएको छ ? मैले आफ्नो गुरु कार्यको जिम्मेवारी कुन ढङ्गले पूरा गरिरहेको छु ? मेरा गल्ती-कमजोरीहरू के भइरहेका छन् ? मेरो जीवनमा सफलता वा असफलताले कुन मोड लिइरहेका छन् ? यसरी आत्मनियन्त्रण र निरीक्षणले हामीलाई सजग बनाउँदछ ताकि गल्तीहरू सुधार गर्दै दोस्रोपटक गल्तीबाट बच्न सकौं र जीवन जिउने कलाको विकास गर्न सकौं । आत्मनिरीक्षणले यो थाहा पाउन सकिन्छ कि हामी कति लोकप्रिय र कति अप्रिय छौं । त्यस्तै कति सफल र कति असफल छौं । यसरी आफ्नो अवगुण आफै पहिचान गर्दै नकारात्मकताको त्याग गरी आफ्नो प्रतिभालाई उजागर गर्दै त्यसको विकासमा लाग्नुपर्दछ ।

आफ्नो उद्देश्य र महत्त्वाकांक्षालाई पत्ता लगाउँदै आफ्नो क्षमता र शक्तिलाई हेरौं । हामीले आफैभित्र महान् शक्ति लुकेको देख्नेछौं । त्यो विराट् गुरुशक्तिको ज्वाला आफैभित्र पाउनेछौं । अब त्यस शक्तिको प्रयोग गर्ने बेला आएको छ । त्यो शक्तिलाई हेर्ने प्रयास गरौं । अनि मात्र हामी आत्मनिरीक्षण गरी आफैलाई चिन्नेछौं। हामी सम्झन्छौं कि हामी सही छौं, हामीले ठीक गरेका छौं । तर सत्यता त्यो नहुन पनि सक्दछ। हाम्रो गल्ती भएको हुन सक्दछ। हरेक कार्य त्रुटिपूर्ण हुन सक्दछन् । हामी आलोचनाको शिकार हुन सक्दछौं तर वास्तविकता के हो हामीलाई थाहा नहुन पनि सक्छ। अब वास्तविकताको आँखाले स्वयंलाई केलाएर हेरौं र आत्मशक्तिद्वारा नकारात्मक शक्तिलाई नाश गर्ने कोशिश गरौं । अनि मात्र हामीभित्र अंकुरित हुन्छ त्यो सफलताको प्रारम्भिक विश्वास । त्यही गुरु प्राप्तिको साँचोको नाम हो आत्मविश्वास अर्थात् स्वयंको विश्वास। जब हामीभित्र आत्मविश्वास जागेर आउँछ, हामीभित्र रहेको शक्ति प्रस्फुटित हुँदै असम्भव गुरु कार्य पनि गर्न सक्दछौं। विश्वासको शक्ति महान् छ। यदि विश्वासका साथ हामी कुनै प्राप्त मन्त्र जप्दछौं भने तुरुन्त फलदायी हुन्छ । प्राप्तिको साँचो नै आत्मविश्वास हो। जसले प्राप्ति गरेका छन् उनीहरूमा आत्मविश्वासको भण्डार हुन्छ। गुरूप्रति, आश्रमप्रति र अध्यात्मप्रति हाम्रो विश्वास जति हुँदैन त्यति नै रूपमा हाम्रो आत्मिक स्तर घटेर जान्छ। जब हामीलाई विश्वास हुन्छ तब कार्यशक्तिको वृद्धिले सफलताको शिखर चुम्दछ । आत्मविश्वास घटेको अवस्थामा शक्तिमा ह्रास आउँदछ। हामीभित्र रहेको गुरुत्व शक्ति नै आत्मविश्वासमा अडेको हुन्छ । त्यसैले गुरूप्रतिको दृढ विश्वासले नै गुरु प्राप्ति सम्भव बनाएको छ ।

म के गर्न सक्छु र ? यही कमजोर प्रश्न भावले

नै हामीलाई पतनको बाटोमा लैजान्छ । आशङ्काले नै असफलतालाई निम्त्याउँदछ । गुरु चरणमा अश्रुधारा बगाई प्रार्थना गर्दै भावविह्वल होऔँ कि 'हे ब्रह्माण्डनायक सद्गुरुदेव ! म हजूरको अंश हुँ । मलाई हजूरको चरणको दास बनाउनुहोस् ताकि हजूरको शक्तिले यो संसारमा गोनि शक्तिको सन्देश फुक्न सकूँ । म मेरो शक्ति वृद्धि गर्दै दृढ विश्वास गर्दछु कि हजूरलाई प्राप्त गरेरै छोड्छु, हरपल हजूर मेरो शिरमा विराजमान हुनुहुन्छ । मलाई विश्वास छ कि जो हजूर चाहनुहुन्छ त्यो म गर्न सक्छु । ममा हजूरको शक्ति प्रस्फुटित भइरहेको छ । रोमरोममा हजूरको भाव मिश्रित भइरहेको छ । पलपल हजूरको यादले म छट्पटिन्छु । अब म हार्ने छैन, गोनि युगको लागि मेरो महात्त्वपूर्ण योगदान रहनेछ । हे परम कृपालु सद्गुरुदेव मलाई कृपा गर्नुहोस् ।' अब हेर्नुहोस् वास्तविक गुरुभक्ति त बल्ल पो शुरु हुन्छ । साँच्चै गुरु हाम्रो हृदयमा बास गर्नुहुन्छ । जब हामी रुन्छौँ, आँसु बगाउँदछौँ तब हाम्रो मन शून्य हुन्छ, मात्र गुरु नाममा यो मन रम्दछ । जब हामी तर्क, बुद्धि त्यागी भावविह्वल भई आत्मविश्वासका साथ गुरु चरणमा समर्पित हुन्छौँ त्यस अवस्थामा हाम्रो अवचेतन मन जागृत भएको हुन्छ । जब हाम्रो अवचेतन मनमा गुरु प्राप्तिको सन्देश र शक्ति प्रसारण हुन्छ त्यो आत्मविश्वासले गुरु सत्तासँग हाम्रो सूचना पुऱ्याउँदछ र हामी गुरु मार्गमा लीन हुँदै गुरु प्राप्तिको चेतनामा डुब्न सक्छौँ । हाम्रो लागि असम्भव केही रहने छैन मात्र भित्रैदेखि सत्य विश्वास गरौँ कि हरपल गुरुशक्ति ममा छाइरहेको छ ।

गुरु पथबाट विचलित गराउन विभिन्न नकारात्मक शक्तिले हामीलाई विचलित गराइरहेका हुन सक्दछन् । यस्तो परीक्षालाई पार गर्न नकारात्मक कुरालाई ध्यान नदिई अझ आत्मविश्वास बढाई हिँड्नुपर्दछ । समाजले हामीलाई भड्काउन बदनाम, आलोचना, टीकाटिप्पणी गर्न सक्दछन् । तर त्यसको कुनै वास्ता नगरी गुरूप्रतिको विश्वासलाई बलियो बनाउँदै अघि बढ्नुपर्दछ । प्रायः मानिस सफलता र असफलतालाई भाग्यको खेल ठान्दछन् । विगतका गल्तीलाई कोट्याएर आफैलाई आसफल हुँ भन्दै दोष दिइरहन्छन् र उनीहरूको आत्मविश्वास कमजोर हुँदै साँच्चै नै असफलताको जीवनयापन गर्न बाध्य हुन्छन् । वास्तवमा हामी हाम्रो जीवन र भाग्यको स्वरूप आफै निर्धारण गर्न सक्छौँ । मात्र खाँचो छ– गुरु शरणको, गुरु प्राप्तिको । नकारात्मक सोच, दुःख, पीडा तथा असफलताको पछाडि नै सफलता र गुरु प्राप्तिको कारण लुकेको हुन्छ । यस्ता गुरु परीक्षाले ल्याएको सन्देशलाई सुन्ने बानी बसाल्नुपर्दछ । दुःखभित्र पनि सुख हेर्ने गर्नुपर्दछ । यस्ता लक्षण र विशेषताले नै भरिपूर्ण हुन्छन् दृढ आत्मविश्वासी साधक-साधिका । हाम्रो मन, विचार नै हाम्रो शक्तिको मापदण्ड हो । यसलाई आत्मविश्वासको प्रकाशले भर्नुपर्दछ । आत्मविश्वास नै कमजोर भएको खण्डमा हाम्रो क्षमता घटेर हाम्रो साधना शक्ति पनि ह्रास हुन्छ । मधुर बत्तीले अन्धकारमा बाटो देखाउन सक्दैन । हामी गुरुरूपी ज्वालाले जाज्वल्यमान भएर आत्मविश्वास र गुरु विश्वासले असफलताको अन्धकाररूपी डरलाई नष्ट गर्नुछ ।

जति पनि वैज्ञानिक आविष्कार भए, आध्यात्मिक खोज र अनुसन्धान भए, ती सबै आत्मविश्वासको कारण नै भएका हुन् । आकाशमा हवाइजहाज उडाउने राइट दाजुभाइलाई पनि समाजले पागल भन्थे, जिस्काउँथे । आखिर उनीहरूको त्यो अदम्य साहस, धैर्य र आत्मविश्वासले आज मानिस हावामा उड्न सके, हवाइजहाजको आविष्कार भयो । आत्मविश्वासलाई हृदयस्पर्श गर्नाले प्रतिभा जागेर उठ्दछ, गुरु मार्गको ढोका खुल्दछ र जीवनको पूर्णानन्दमा रम्न सकिन्छ ।

अब्राहम लिंकन गरिब परिवारमा जन्मेर पनि दृढ आत्मविश्वासले गर्दा उनी अमेरिकाका राष्ट्रपति भए । उनले आत्माको आवाज सुने कि गृहयुद्धको दलदलमा फसेको मेरो राष्ट्रलाई मैले सम्हाल्नुपर्छ । यो उनको अदम्य साहस र आत्मविश्वासको परिणाम नै थियो । यस्तै थुप्रै वैज्ञानिक, योगी, ऋषिमुनिहरूले यो संसारलाई परिवर्तन गरी सकारात्मक सूचना दिएर गए । यी सफलताका कथाहरू तिनै हस्तीहरूको आत्मविश्वासका कारण आज हामी सुन्न पाइरहेका छौँ ।

एन्सवर्थ रोवर्ट एक विश्वविख्यात् लेखक थिए । उनकी श्रीमती अति झगडालु र छुच्ची थिइन् । उनी चाहन्थिन् कि रोवर्टले लेखन कार्य नगरून् । यसलाई छोडेर अरू नै कार्यको प्रारम्भ गरून् । एकदिन लेखक रोवर्ट आफ्नो एउटा पुस्तकको सम्पूर्ण पाण्डुलिपि मिलाउँदै थिए । त्यसै क्रममा उनकी श्रीमतीले रिसको झोँकमा उक्त पाण्डुलिपि आगोमा जलाइदिइन् । रोवर्ट दर्शकझैँ भएर त्यो दृश्यलाई हेरिरहे । जे हुनु भइसक्यो, अब पछुताएर के गर्ने ? उनको दुःखले अझ नयाँ आत्मविश्वासलाई जन्मायो र त्यो पुस्तकभन्दा राम्रो पाण्डुलिपी पुनः तयार पारे । उनी प्रख्यात् भए । उनको सफलताको रहस्य आत्मनियन्त्रण र आत्मविश्वास नै थियो । हामी पनि आत्मविश्वासका साथ प्रतिज्ञा गरौँ कि जस्तोसुकै चुनौती र परीक्षा आए पनि हुरीबतास अनि तुफानसँग टक्कर लिएर गोनि युगको लागि लडिरहने छौँ र सारा संसारलाई गोनि शक्तिको असीमता देखाइदिनेछौँ– पूर्ण आत्मविश्वासका साथ । जय गुरुदेव !

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौं । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

## तन्त्रेश्वर-मन्त्रेश्वर पूज्य श्रीमालीज्यू

वाम मार्ग, दक्षिण मार्ग वा अघोर पन्थ सबै क्षेत्रमा पूज्य गुरुदेवको गति समान छ । तन्त्रको सर्वश्रेष्ठ उपलब्धि अष्टसिद्धिहरूको बारेमा गुरुदेवले स्पष्ट व्याख्या गर्नुभएको छ भने अत्यन्त दुर्लभ स्थितिको बारेमा पनि प्रामाणिकरूपमा सिकाउनुभएको छ, बुझाउनुभएको छ । परकाया प्रवेश (जसको माध्यमबाट आफ्नो शरीर छोडी मृत शरीरमा चेतना संचार गरिन्छ), हादी विद्या (जसको माध्यमबाट भोक-प्यास तथा मलमूत्र विसर्जन क्रियाबाट छुटकारा पाइन्छ), कादी विद्या (जसको माध्यमबाट शरीरलाई सर्दी-गर्मी तथा वर्षाबाट सुरक्षित राख्न सकिन्छ अर्थात् यी कुराहरूले शरीरलाई असर गर्दैनन्), मदालसा विद्या (जसको माध्यमबाट शरीरलाई ठूलो वा सानो जत्रो आकार पनि दिन सकिन्छ), त्यस्तै वायु गमन सिद्धि, सूर्य सिद्धान्त, मृतसञ्जीवनी विद्या, कनकधारा सिद्धि आदि अत्यन्त दुर्लभ गोपनीय अनि जटिल क्रियाहरूका बारेमा पनि पूज्य गुरुदेवले सबैका लागि प्रकाश पार्नुका साथसाथै शिविरहरूको माध्यमद्वारा प्रायोगिकरूपमा पनि सिकाउनुभएको छ । पूज्य गुरुदेव मन्त्रको क्षेत्रमा पनि अप्रतिम हुनुहुन्छ । समस्त गोपनीय अनि लुप्त मन्त्रहरूको उहाँले शिविरको माध्यमबाट, पत्रिकाको माध्यमबाट तथा व्यक्तिगतरूपमा प्रकाशन गरी सार्वजनिक गर्नुका साथै नयाँ ढङ्गले प्रयोग पनि गराउनुभएको छ । प्रत्येक शिविरमा यदि साधना दोहोरिए पनि आजसम्म कुनै मन्त्र दोहोरिएको छैन अर्थात् एउटै मन्त्र दुईपटक प्रयोग गराउनुभएको छैन । बरु नयाँ

मन्त्र नयाँ विधानद्वारा साधना गराउनुभएको छ ।

सन् १९८७ मा कुल्लुमा तन्त्र साधना शिविर सम्पन्न भएको थियो । पण्डालभित्र गुरुदेव तन्त्रको सूक्ष्मताको बारेमा निकै सरल भाषामा प्रवचन दिइरहनुभएको थियो । पण्डालबाहिर एउटा ढुङ्गामा एकजना वामी (तान्त्रिक) बसेको थियो । उसले गुरुदेवलाई मारण प्रयोग गरेको रहेछ । भित्र प्रवचन गर्दागर्दै गुरुदेवले आफ्ना दुवै हातका चोरी औंला आपसमा जोडेर झट्कार्दै छुट्याउनु मात्र के भएको थियो, एकदम जोडले मान्छे लडेको आवाज सुनियो । केही शिष्यहरू बाहिर गई हेर्दा त त्यो तान्त्रिक भुइँमा पछारिएको थियो । वास्तवमा गुरुदेव तन्त्रेश्वर हुनुहुन्छ र बिनामन्त्र प्रभाव उत्पन्न गर्नु केवल उहाँकै वशमा छ । आज हामी सबैले समयमै श्रीचरणहरूको आश्रय छिटोभन्दा छिटो लिनुपर्छ किनभने यस्ता दिव्य पुरुषको दर्शनका लागि पनि यदि हामीले छुद्र चित्तद्वारा समाजको डरले अल्झिरह्यौं भने त जीवनको उत्थान फेरि कहिले पनि सम्भव हुने छैन । क्रमश:

जय गुरुदेव !

कविता

## जीवन

एकबिहानै पंछीको चिरबिरसँगै आउने
सूर्योदयको न्यानो माया,
अनि पलपल जीवन कोषका थैलीहरु
रित्तिने र भरिने वायुको अभ्यास मात्रै हो त जीवन !
वायुका प्रणेता रुख विरुवा
अनि जलको सिंचन
अन्न फलको उपभोग अनि
गुलियो, पिरो, अमिलोको स्वाद पनि त हैन जीवन !
माया, ममता र वासनाको
छताछुल्ल चाहना,
क्रोध, लोभ अनि ईर्ष्याको
असीमित गहना हो र जीवन ?
सधैँ अभावै अभावको
भ्रमपूर्ण भौतिक यात्रा,
कहिल्यै पूर्ण महसुस नहुने
पद, पैसा र पावरको जात्रा
पनि त रहेनछ जीवन
लाग्छ जीवन त परिभाषा भित्रै छैन
सायद जीवनको अनन्तता
भौतिकताको उचाइले नाप्नै सक्तैन,
वरपरका टुक्राटुक्री माया, ममता, लोभ अनि मोहका
कथाले बाँध्नै सक्तैन,
त्यसैले लाग्छ जीवन त ननापिने तेजपुञ्ज हो,
ज्ञानको ज्योति हो,
अनन्तताको खोजी हो,
अनि ज्ञान गुरु हो,
सायद सद्गुरु हो !

– साधक कौशलकुमार पौडेल
काठमाडौँ, नेपाल।

## २०६६ भाद्र महिनामा पर्ने चाडपर्व

| मिति | चाडपर्व |
|---|---|
| भाद्र १ गते | **श्री शिव गोरक्ष हवन** |
| भाद्र २ गते | **तान्त्रोक्त वटुक भैरव हवन,**<br>प्रदोष व्रत |
| भाद्र ३ गते | **तान्त्रोक्त महालक्ष्मी हवन,**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| भाद्र ४ गते | **तान्त्रोक्त वगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन,**<br>कुशे औंसी, पिता सम्मान दिवस |
| भाद्र ५ गते | **दिव्य गुरु महोत्सव,** |
| भाद्र ६ गते | दर खाने दिन |
| भाद्र ७ गते | हरितालिका(तीज), गणेश चतुर्थी |
| भाद्र ८ गते | ऋषि पञ्चमी, सप्तर्षि पूजा |
| भाद्र ११ गते | दुर्वाष्टमी, महालक्ष्मी व्रत शुभारम्भ |
| भाद्र १२ गते | गोरखकाली पूजा |
| भाद्र १५ गते | हरिपरिवर्तनी एकादशी |
| भाद्र १६ गते | प्रदोष व्रत |
| भाद्र १८ गते | अनन्त चतुर्दशी, कुमारी-इन्द्रजात्रा |
| भाद्र २० गते | सोह्र श्राद्ध शुरु |
| भाद्र २६ गते | गोरखकाली पूजा,<br>महालक्ष्मी व्रत समाप्त |
| भाद्र २८ गते | मातृ नवमी |
| भाद्र ३० गते | इन्दिरा एकादशी |
| भाद्र ३१ गते | प्रदोष व्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# गुरु गीता

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**स्वशरीरं शवं पश्यन्**
**तथा स्वात्मानमद्वयम् ।**
**यः स्त्री कनकमोहघ्नः**
**स भवेत् परमो गुरुः ॥१७७॥**

भावार्थ : आफ्नो शरीरलाई शवसमान ठान्दै, आफ्नो आत्माको अद्वितीयतालाई बुझ्ने, जो स्त्री, पुरुष, धन-सम्पत्ति आदिको मोहलाई समाप्त पार्ने हुनुहुन्छ, उहाँ नै सद्गुरु हुनुहुन्छ । सद्गुरु प्राप्त भएपछि साधकलाई उहाँको कृपाले ब्रह्मानन्दको अनुभूति स्वतः नै हुन थाल्छ । तत्पश्चात् उसको मन अन्तर्लीन हुन जाने हुनाले शारीरिक मोह तथा सांसारिक वस्तुहरूसँगको कुनै पनि प्रकारको सम्बन्ध रहँदैन ।

**वाग्मी तूत्कटसंसार**
**सागरो त्तरणक्षमः ।**
**यतोऽसौ संशयश्छेत्ता**
**शास्त्र युक्त्यनुभूतिभिः ॥१७८॥**

भावार्थ : वाक्चातुर्यपूर्ण यस संसाररूपी सागरबाट शिष्यलाई पार लगाउनमा सद्गुरु सक्षम हुनुहुन्छ किनकि उहाँले शास्त्र, युक्ति तथा अनुभूतिहरूद्वारा शिष्यको हृदयको अज्ञानलाई नष्ट गरिदिनुहुन्छ । जुन व्यक्ति कुनै नदी या तलाउको पारी गएको छ अथवा जान समर्थ छ, उसैले अरूलाई पनि पारी लान सक्छ । सद्गुरु स्वयं त्यस परमतत्त्वसँग अवगत हुनुहुन्छ । त्यसैले आफ्ना शिष्यलाई पनि परमानन्दमा निमग्न गराइदिनुहुन्छ ।

**गुरुनाम जपाद् देवि !**
**बहु जन्मार्जितान्यपि ।**
**पापानि विलयं यान्ति**
**नास्ति सन्देहमण्वपि ॥१७९॥**

भावार्थ : गुरुमंत्रको जपले जन्म-जन्मान्तरबाट अर्जित पाप नष्ट हुन्छन्, यसमा कुनै संदेह छैन । जसरी आगोको झिल्का सानो भए पनि रुवाको पहाडलाई एकै क्षणमा भस्म गरिदिन्छ, त्यस्तै प्रकारले गुरुमंत्र पनि शिष्यका अनन्त पापहरूलाई समाप्त गर्न सक्षम हुन्छ । गुरु मंत्र 'मंत्रराज' हो, यसमा निहित शक्ति अनन्त छ । यसबाट शिष्यका समस्त पाप-ताप समाप्त हुन्छन् र यस नामको महिमाले ऊ पावनतम हुन्छ ।

**श्री गुरोस्सदृशं दैवं**
**श्रीगुरोस्सदृशः पिता ।**
**गुरुध्यानसमं कर्म**
**नास्ति नास्ति महीतले ॥१८०॥**

भावार्थ : यस संसारमा गुरु समान देव अरू कोही छैनन्, गुरु समान पिता र गुरुको ध्यान समान पावनतम कर्म अरू केही छैन । 'गुरुः परम दैवतम्' यस वाक्यअनुसार गुरुभन्दा ठूलो देवता अरू कोही छैनन् किनकि गुरुको शरीरमा समस्त देवताहरू सूक्ष्मरूपले समाहित हुन्छन् र उहाँहरू सबैको शक्ति पनि गुरुभित्र विद्यमान हुन्छ । तसर्थ, गुरुबाहेक अरू कुनै ठूलो देवताको कल्पना व्यर्थ छ । यस्ता गुरुको स्पर्शले शिष्य अमृतत्त्व र कालजयी हुन जान्छ ।

**कुलं धनं बलं शास्त्रं**
**बान्धवास्सोदरा इमे ।**
**मरणे नोपयुज्यन्ते**
**गुरुरेको हि तारकः ॥१८१॥**

भावार्थ : कुल, धन, बल, शास्त्र, बन्धु-बाधव, सम्बन्धीहरू मृत्युकालमा कोही पनि उपयोगी छैनन् । यी नातागोताहरूले मृत्युबाट बचाउन सक्दैनन् किनकि यिनीहरू सबै कुनै न कुनै दिन मृत्युको मुखमा पर्नेछन् । यस्तो स्थितिमा यिनीहरूले अरूलाई कसरी मृत्युबाट बचाउन सक्छन् ? केवल गुरुले मात्र मृत्यु-भयबाट सुरक्षित गर्न सक्नुहुन्छ किनकि गुरु नै तारणहार हुनुहुन्छ र स्वयं अमृतमय हुनुहुन्छ । तसर्थ, उहाँ आफ्ना शिष्यलाई अमर बनाइदिनुहुन्छ ।

**कुलमेव पवित्रं स्यात्**
**सत्यं स्वगुरुसेवया ।**
**तृप्ता स्युस्सकला देवा**
**ब्रह्माद्या गुरुतर्पणात् ॥१८२॥**

भावार्थ : साँचो गुरुसेवाले कुल पवित्र हुन्छ, गुरु खुशी हुनुभएमा ब्रह्मा, विष्णु आदि समस्त देवता तृप्त हुन्छन् । गुरुको अर्थ हो– शिष्यलाई सबै कुरा दिनुहुने । गुरुको ज्ञानलाई प्राप्त गर्ने एउटै मात्र विद्या छ - 'सेवा', जसरी बुबाले योग्य तथा सुपात्र छोरा पाएर आफ्नो समस्त सम्पत्ति उसलाई दिन्छन्, त्यसैगरी निश्छल हृदयले गरिएको सेवाबाट प्रसन्न हुनुभएर गुरुले आफ्ना समस्त ज्ञान शिष्यभित्र समाहित गरिदिनुहुन्छ । क्रमशः जय गुरुदेव !

# आफ्नो हात आफै हेरौं

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौं । प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा हत्केलाका चिह्नहरूको फलको बारेमा चर्चा गरिएको छ । यो लेख पढेर तपाईं पनि आफ्नो हातको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ । यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।

## हत्केलामा पाइने चिह्नहरू

हत्केलाको अध्ययन गर्ने बेलामा त्यसमा अङ्कित चिह्नहरूको पनि सावधानीपूर्वक अध्ययन गर्नुपर्ने हुन्छ किनकि भविष्यफल र फलादेशमा यी चिह्नहरूले धेरै सहयोग पुऱ्याउँछन् ।

हत्केलामा जुन चिह्न देखिन्छन्, ती प्रमुख निम्नप्रकारका छन्–

१. रेखा २. अधिक रेखाहरू ३. आपसमा काटिएका रेखाहरू ४. विन्दु ५. क्रस ६. नक्षत्र ७. वर्ग ८. वृत्त ९. त्रिकोण १० जाली ।

पर्वतहरूमा पाइने यी चिह्नहरूको शुभाशुभ फल स्पष्ट गरिन्छ–

### १. गुरू पर्वत :

एउटा रेखा : कार्यमा सफलता ।

एकभन्दा अधिक रेखाहरू : भाग्योदय तथा नवीन कार्यहरूमा रुचि

आपसमा काटिएका रेखाहरू : निम्नकोटिका विचार तथा जीवनमा दिग्दारीहरू

विन्दु : सामाजिक प्रतिष्ठामा कमी

क्रस : वैवाहिक जीवनमा पूर्णता तथा घरमा मांगलिक कार्य

नक्षत्र : उच्च इच्छाहरू तथा तिनको पूर्ति

वर्ग : कल्पना र यथार्थको सुखद समन्वय

त्रिकोण : राजनैतिक एवं धार्मिक कार्यहरूमा सफलता

जाली : अन्धविश्वास, अशुभ घटनाहरू तथा हानि

वृत्त : प्रत्येक कार्यमा सफलता

गुरु चिह्न : पर्वतमा पाइने गुणहरूको विकास

शनि चिह्न : तन्त्र विद्यामा सफलता

सूर्य चिह्न : ललितकलामा रुचि ।

बुध चिह्न : प्रशासनिक दक्षता

शुक्र चिह्न : उच्च घरका महिलाहरूमा प्रेम

चन्द्र चिह्न : युद्धमा निपुणता ।

### २. शनि पर्वत :

एउटा रेखा : भाग्योदयमा वृद्धि

धेरै रेखाहरू : जीवनमा निरन्तर बाधाहरू

आपसमा काटिएका रेखाहरू : दुर्भाग्य तथा चिन्ता

विन्दु : असम्भावित घटनाहरूमा वृद्धि

क्रस : कमजोरी तथा नपुंसकता

नक्षत्र : हत्या गर्ने भावनाको विकास

वर्ग : अनिष्टहरूबाट बचाव

वृत्त : माङ्गलिक कार्यमा रुचि

त्रिकोण : रहस्यमय कार्यहरूमा वृद्धि

जाली : भाग्यहीनता

शनि चिह्न : धर्म, दर्शन तथा तन्त्रादि विद्याहरूमा रुचि
गुरु चिह्न : दर्शनको क्षेत्रमा विश्वप्रसिद्ध सफलता
सूर्य चिह्न : कलात्मक सौन्दर्यको विकास
बुध चिह्न : ज्योतिष शास्त्रमा रुचि
शुक्र चिह्न : विपरीत योनिप्रति प्रेमको आवेग एवं असफलता
मङ्गल चिह्न : न्यायाधीश एवं न्यायप्रियता

**३. सूर्य पर्वत :**

एउटा रेखा : धन, सम्मान एवं प्रतिष्ठामा वृद्धि
धेरै रेखाहरू : कलात्मक रुचि तथा उचच पद प्राप्तिआपसमा
काटिएका रखाहरू : नोकरीमा बाधारु ।
विन्दु : अपमान एवं पराजय
क्रस : प्रसिद्धिमा न्यूनता
नक्षत्र : धन, उच्च पद प्राप्ति
वर्ग : समाजमा विशेष सम्मान
वृत्त : जीवनमा धेरैपटक विदेश यात्रा
त्रिकोण : कलाको क्षेत्रमा उच्च सम्मान
जाली  : मान हानि
सूर्य चिह्न : कलाको माध्यमबाट विश्वप्रसिद्ध सम्मान तथा श्रेष्ठ धन लाभ
शनि चिह्न : तन्त्र विद्यामा रुचि
गुरु चिह्न : सफल राजनीतिज्ञ
बुध चिह्न : वाक्पटु
शुक्र चिह्न : कविता तथा कलाप्रति विशेष झुकाव
चन्द्र चिह्न : साहित्यिक कार्यहरूमा सफलता
मङ्गल चिह्न : प्रसिद्ध सैनिक अथवा सेनाध्यक्ष ।

**४. बुध पर्वत :**

एउटा रेखा : धनवान् तथा समृद्ध
धेरै रेखाहरू : व्यापारमा असाधारण योग्यता
आपसमा काटिएका रेखाहरू : सफल चिकित्सक
विन्दु : व्यापारमा असाधारण हानि
क्रस : टाट पल्टनु
नक्षत्र : विदेशमा व्यापार गर्ने
वर्ग : भविष्यलाई चिन्ने
वृत्त : दुर्घटना तथा आकस्मिक मृत्यु
त्रिकोण : राजनैतिक सफलता
जाली : मान हानि
धब्बा : व्यापारमा असफलता
बुध चिह्न : सफल व्यापारी
गुरु चिह्न : विज्ञानमा असाधारण योग्यता
शनि चिह्न : जीवनमा हरेक क्षेत्रमा निराशा
सूर्य चिह्न : धार्मिक भावनाको विकास एवं ज्योतिष शास्त्रमा निपुणता
शुक्र चिह्न : धनको लालचमा निन्दनीय प्रेम
चन्द्र चिह्न : षडयन्त्र तथा धोका दिने प्रवृत्ति
मङ्गल चिह्न : ठगी विद्यामा सफलता

**५. शुक्र पर्वत :**

एउटा रेखा : तीव्र कामवासना
धेरै रेखाहरू : अत्यधिक भोगी
आपसमा काटिएका रेखाहरू : प्रेममा असफलता तथा सम्मान हानि
विन्दु : गुप्ताङ्गको रोग
क्रस : असफल प्रेम तथा जीवनमा निराशावादी भावनाको विकास
नक्षत्र : प्रेमिकाको कारण धन हानि
वर्ग : जेल यात्रा
वृत्त : दुर्घटनामा शारीरिक क्षति
त्रिकोण : जीवनमा धेरै स्त्रीहरूसँग भोग गर्ने
जाली : अस्वस्थ शरीर
शुक्र चिह्न : विशेष भोगी
गुरु चिह्न : चापलुसी गर्ने
शनि चिह्न : ईर्ष्या एवं अन्यायपूर्ण प्रेम भावना
सूर्य चिह्न : आदर्श प्रेम
बुध चिह्न : धनका लागि प्रेम
चन्द्र चिह्न : वासनापूर्ण विचार
मङ्गल चिह्न : जीवनमा धेरैपटक स्त्रीहरूबाट बलात्कार ।
क्रमश:

जय गुरुदेव !

**जनकपुर आश्रम नयाँ ठाउँमा**

**सिद्धाश्रम शक्ति केन्द्रको जनकपुरमा रहेको प्रस्तावित सम्पर्क कार्यालय हाल शिवचोक, जनकपुरधाममा सरेको जानकारी गराइन्छ ।**

# मधुमेह

मधुमेह रोगसँग प्राय: सबैजना परिचित नै छन् । यस रोगमा रोगीलाई बारम्बार अधिक मात्रामा पिसाब हुन्छ जसमा चिनीको अधिकता बढी हुनाले कमिलाहरू आकर्षित हुने गर्दछन् । यसैकारणले यस रोगलाई 'चिनी' रोग पनि भनिन्छ । मधुमेहलाई अंग्रेजीमा डायविटिज (Diabetes) भनिन्छ ।

साधारणतया खानामा भएको कार्बोहाइड्रेटको पाचनपश्चात् ग्लुकोज बन्दछ । जुन ग्लुकोज शोषण हुनुपर्ने ठाउँमा हुन नसकेर रगतमा ग्लुकोजको स्तर बढ्छ। शरीरको स्वाभाविक क्रियास्वरूप आमाशयमा भएका विशिष्ट कोशिकाहरूद्वारा इन्सुलिन नामक हार्मोन उत्पादन हुन्छ जसले ग्लुकोजलाई विभिन्न कोषहरूमा पुऱ्याउन महत्त्वपूर्ण कार्य गर्दछ । यसको अतिरिक्त अर्को महत्त्वपूर्ण कार्य भनेको कोषभित्रको ग्लुकोजलाई भस्म गरी ऊर्जा उत्पन्न गर्न मद्दत पुऱ्याउँछ ।

मधुमेहको बिरामीलाई यही आवश्यक तत्त्व 'इन्सुलिन'को कमी हुन्छ, जसको फलस्वरूप ग्लुकोज शरीरका कोषभित्र पुग्न सक्दैन र रगतमा ग्लुकोजको मात्रा निरन्तररूपमा बढ्दै जान्छ । यसले गर्दा धेरै मात्रामा ग्लुकोज र पानी मृगौलाद्वारा छानिन्छ र अधिक पिसाब आउन थाल्छ जुन मधुमेहको प्रमुख लक्षण हो । शरीरबाट ग्लुकोज र पानी निस्कने हुनाले बढी भोक लाग्छ, प्यास निरन्तर लागिरहन्छ ।

**प्रमुख कारण** :

नि:सन्देह डायविटिज एक वंशाणुगत रोग हो । यदि आमा र बुबा दुवै यस रोगबाट ग्रसित छन् भने सन्तानमा हुने सम्भावना धेरै हुन्छ । यदि आमा बुबामध्ये कुनै एकजनामा छ भने सन्तानमा हुने सम्भावना ५० प्रतिशत हुन्छ । जुन समुदायमा सगोत्र विवाहको निषेध छ, उक्त समुदायमा यस्तो रोग कम पाइन्छ तर परस्पर रक्त सम्बन्ध भएकाबीच विवाह हुनेहरूमा यस्ता रोगको प्रतिशत दिनानुदिन बढ्दै गइरहेको छ ।

मोटोपन यस रोगको कारणको अर्को सूचीमा आउँछ । मोटो शरीर जहाँ उपहासको केन्द्र बन्छ, त्यहीं मधुमेहको लागि निमन्त्रणा-पत्रझैं हुन्छ । मानव शरीरमा इन्सुलिनले ग्लुकोजको उपयोग गर्नुको साथै बोसो पनि जम्मा गर्ने कार्य गर्दछ जसको कारण मोटो व्यक्तिमा इन्सुलिनको कमी हुन्छ र मधुमेहको लागि बाटो खुला हुन्छ ।

अधिक गुलियो पदार्थको सेवन पनि मधुमेह रोगको लागि निमन्त्रणा दिनु हो । बढी गुलियो पदार्थ पचाउन अधिक मात्रामा इन्सुलिनको आवश्यकता पर्दछ । अधिक इन्सुलिन उत्पादन गर्ने कोशिकालाई बढी कार्य गर्नुपर्छ, जसले गर्दा उक्त कोशिकाहरू शिथिल भएर काम गर्न छोड्छन् र इन्सुलिन उत्पादन रोकिन्छ ।

मधुमेह एक यस्तो रोग हो जो उमेरमा भर पर्दैन । बच्चादेखि वृद्धसम्म जुनसुकै उमेरमा हुन सक्छ । इन्सुलिन उत्पादन गर्ने कोशिकाहरू जीवाणुद्वारा संक्रमण भएमा पनि इन्सुलिन उत्पादन हुने क्रिया बन्द हुन्छ ।

**चिकित्सा**

मधुमेह रोगको चिकित्सा गर्नुभन्दा पहिले रोगीको वजन र अवस्थाको ज्ञान हुनु जरुरी छ ।

(क) पहिलो प्रकार : मोटो र बलवान् रोगी ।

(ख) दोस्रो प्रकार : दुब्लो र दुर्बल रोगी ।

मोटो र बलवान् रोगीमा परतन्त्र मधुमेह हुन्छ र यसको लागि संशोधन चिकित्सा उपयुक्त हुन्छ । दुब्लो तथा दुर्बल रोगीमा स्वतन्त्र मधुमेह हुन्छ । जसको लागि संवर्धन चिकित्सा उपयुक्त हुन्छ ।

**मधुमेहमा विशेष आयुर्वेदिक औषधिहरु** :

मधुमेह उपचारणार्थ विभिन्न जडिबुटीहरू प्रयोगमा आएका पाइन्छन् । जस्तै: प्रात: करेलाको स्वरस १० देखि २० मि.लि. सेवन हरेक रोगीका लागि उपयोगी छ । गुडमारको पत्र प्रात: सेवन गर्न सकिन्छ । त्यस्तै सेतो सदासुन्दरीको पात, नीमका कलिला कोपिला, जामुनको बीज आदि उपयोगी छन् ।

१. **चूर्ण कल्पना** :
- गुडूची चूर्ण
- नीम चूर्ण
- जम्बूफलादि चूर्ण

२. **वटी (गोली) कल्पना** :
- चन्द्रप्रभावटी

३. **रस रसयान** :
- वसन्तकुसुमाकर रस
- शिलाजीत
- त्रिवंग भस्म
- सर्वतोभद्र रस

तीतो, टर्रो, कटु रस भएको औषधि मधुमेह चिकित्सामा उपयोग गरिन्छ । जामुनको बीज चूर्ण, गुडमार, करेला, विजयसार, नीम, प्याज, लसुन, वटांकुर, मेथी, जयन्ती, सप्तरंगी, शिलाजीत, स्वर्णमाक्षिक भस्म आदि मधुमेह रोगमा बहुतै उपयोगी छन् ।

**पेटेन्ट आयुर्वेद औषधिहरु :**

(क) त्रिवंगशिला २ चक्की दिनको २ पटक ।
(ख) हाइपोनिड २ चक्की दिनको ३ पटक ।
(ग) डायसोमा २ चक्की दिनको २ पटक ।
(घ) डायबेकम २ चक्की २ पटक ।
(ङ) एमरी प्लस पाउडर १ चम्चा दिनको २ पटक ।

**आहार व्यवस्था :**

१. थोरै थोरै मात्रामा कम अन्तरालमा खाना खानुपर्दछ ।
२. बोसोरहित तथा प्रोटिनको मात्रा अधिक भएको रेशायुक्त खाना बढी प्रयोग गर्नुपर्छ ।
३. सलादको सेवन गर्नुपर्छ ।
४. केवल वनस्पतिजन्य तेलको प्रयोग गर्नुपर्छ ।
५. रेशायुक्त अनाजको सेवन गर्नुपर्छ ।
६. नीमको फूल र पातको अधिक सेवन गर्नुपर्छ ।
७. बेलपत्रको सेवन लाभकारी छ ।
८. रोगीको अवस्थानुसार योग तथा व्यायाम आवश्यक हुन्छ ।
९. मिठाई, मैदा र मदिरापानबाट टाढा रहनुपर्दछ ।
१०. चिनीबाट निर्मित विभिन्न प्रकारका मिठाईको सेवन निषेध छ ।
११. मानसिक चिन्ता, उद्वेग, क्रोध आदिबाट टाढा रहनुपर्छ ।

जय गुरुदेव !



# मधुमेह रोगमा उपयोगी

मधुमेह आमाशय (Pancreas) बाट उत्पादन हुने इन्सुलिन हार्मोनको कमीले गर्दा हुने रोग हो । आमाशयको स्थान पेटनजिकै पर्ने हुँदा त्यस्ता योगासनहरू उपयोगी हुन्छन् जसको अभ्यास गर्दा उक्त प्रदेशमा रक्त सञ्चार हुन सकोस्, प्राणवायुको सञ्चार हुन सकोस् । अतः निम्न प्रकारका आसनहरू एवं प्राणायामका प्रक्रियाहरू मधुमेहमा लाभदायक सिद्ध भएका छन्–

### १. हलासन

**विधि :**

क) ढाडको बलले उत्तानो परेर सुत्ने र श्वास भित्र भर्दै बिस्तारै बिस्तारै खुट्टालाई उठाउने । पहिले ३० डिग्री फेरि ६० डिग्रीसम्म उठाएपछि खुट्टालाई टाउकोबाट पछाडि लाने । ढाडलाई माथि उठाउँदै श्वास बाहिर

निकाल्दै लैजाने ।

ख) खुट्टालाई टाउकोपछाडि जमिनमा टेकाउने । श्वासको गति सामान्य बनाउने । प्रारम्भमा हातलाई सुविधाको दृष्टिबाट कम्मरको पछाडि राख्न सकिन्छ । पूर्ण स्थितिमा हातलाई जमिनमा राख्ने । ३० सेकेण्डसम्म यो स्थितिमा बस्ने ।

ग) फर्केर सामान्य अवस्थामा आउन पहिले जुन क्रमले माथि गइएको थियो, त्यही क्रमले हातले जमिनलाई दबाउने र खुट्टालाई सीधा बनाउने त्यसपछि झार्दै जमिनमा राख्ने ।

**सावधानी**

कलेजो र फियो धेरै बढेको अवस्थामा यो आसन नगर्ने । उच्च रक्तचाप र काँध दुख्ने रोगीले पनि यो आसन नगर्ने ।

### २. अर्धमत्स्येन्द्रासन

**विधि :**

क) सुखासनमा बसेर दुवै खुट्टालाई पसार्ने र बायाँ खुट्टालाई मोडेर कुर्कुच्चालाई दायाँ गोडाको तिघ्रामुनि राख्ने ।

ख) दाहिने खुट्टालाई बायाँ खुट्टाको घुँडाको नजिक बाहिरतिर जमिनमा राख्ने ।

ग) बायाँ हातलाई दाहिने घुँडाको नजिक बाहिर सीधा राख्दै

# आसन र प्राणायाम



दाहिने गोडाको पञ्जा अर्थात् पैतालालाई समात्ने ।

घ) दायाँ हातलाई पछाडिबाट घुमाएर बायाँ तिघ्राको मूलमा स्पर्श गर्ने, गर्दनलाई दाहिनेतिर घुमाएर पछाडि हेर्ने ।

ङ) यसरी अर्कोपट्टिबाट पनि यो आसनलाई गर्ने ।

### ३. मण्डूकासन

**विधि :**

क) बज्रासनमा बसेर दुवै हातका मुट्ठी बन्द गर्ने । मुट्ठी बन्द गर्ने बेलामा दुवै हातको बूढी औँलाहरूलाई अन्य औँलाहरूले भित्र दबाउने (थिच्ने) ।

ख) दुवै मुट्ठीलाई नाभीको दुई छेउमा लगाएर श्वासलाई तान्ने र उक्त तानेको श्वासलाई बाहिर निकाल्दै पेट घटाउने र अगाडि झुक्ने । आँखा अगाडि हेर्ने ।

ग) केही समय यो स्थितिमा बसेर पुनः वज्रासनमा बिस्तारै श्वास तान्दै उठ्ने र पहिलेकै स्थितिमा आउने, यस क्रमलाई ३/४ पटक दोहोऱ्याउने ।

### ४. शशाङ्क भुजंगासन

**विधि:**

क) घोप्टो परेर सीधा भई दुवै खुट्टा जोडेर सुत्ने ।

ख) दुवै हत्केला छातीको दायाँ र बायाँ राख्ने ।

ग) श्वास तानेर रोक्ने, टाउको र छाती उठाउने, नाइटोमुनिको भागलाई भुइँमा नै राख्ने ।

घ) खुट्टा जोडेर पञ्जालाई पसार्ने, टाउको र छातीलाई सकेजति पछाडि ढल्काएर आकाशतिर हेर्ने ।

ङ) ५/१० सेकेण्ड जति श्वास रोकेर बिस्तारै श्वास छोड्दै घुँडा खुम्च्याएर दुवै हातलाई पसार्दै घुँडा र निधार छुवाउने ।

च) दुवै कुर्कुच्चा र नितम्ब एक आपसमा छुवाउने र शशाङ्कासनमा बस्ने ।

छ) फेरि बिस्तारै हातलाई अगाडि बढाई श्वास लिई रोकेर भुजंगासन गर्ने ।

ज) यसरी ५/६ पटकसम्म दोहोऱ्याउने ।

### ५. कपालभाति प्राणायाम

**विधि:**

क) पद्मासन वा सुखासनमा ढाड सीधा गरी बस्ने ।

ख) शुरुमा २-३ पटक लामो र गहिरो श्वास लिने, छोड्ने गर्ने ।

ग) अब आफ्नो मनलाई श्वास लिनेभन्दा छोड्नेतर्फ केन्द्रित गरेर पेटलाई भित्र तान्दै दुवै नाकको प्वालबाट श्वासलाई जोडले बाहिर फ्याँक्ने ।

घ) पेटलाई भित्र लाँदै नाकको दुवै प्वालमा ध्यान केन्द्रित गरेर श्वासलाई बाहिर फ्याँक्ने ।

ङ) यसलाई शुरुमा २५-३० पटकसम्म लगातार गरेर २-३ पटक गहिरो र लामो श्वास लिँदै, छोड्दै आराम गर्नुपर्दछ ।

च) यसरी ४-५ पटकसम्म अभ्यास गर्न सकिन्छ ।

छ) केही हप्तापछि बिस्तारै ५०-६० वा सोभन्दा बढी लगातार गरी ७-८ पटकसम्म दोहोऱ्याएर गर्न सकिन्छ ।

ज) यसमा श्वास लिनेभन्दा फ्याँक्नमा बढी जोड र ध्यान दिनु आवश्यक हुन्छ ।

**सावधानी :**

गर्भवती महिलाले यो प्राणायामलाई अभ्यास गर्न वर्जित गरिएको छ । साथै मुटुसम्बन्धी रोग भएका र कमजोर व्यक्तिले योग्य प्रशिक्षकको सल्लाहमा गर्न उचित हुन्छ । माथिका आसनहरूका साथै पवन मुक्तासन, मयूरासन, नौकासन, अनुलोम विलोम प्राणायाम मधुमेह रोगमा लाभदायक हुन्छन् । जय गुरुदेव !

## हवन कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको पहिलो हप्ताको विभिन्न बारहरूमा विभिन्न मन्दिर तथा शक्तिपीठहरूमा सम्पन्न गर्दै आइरहेको मासिक हवन कार्यक्रमहरूलाई गत श्रावण महिनामा पनि निरन्तरता दियो । हवन कार्यक्रमहरूअन्तर्गत श्रावण ५ गते श्री शिव गोरक्ष हवन कार्यक्रम पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा, श्रावण ६ गते तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा, श्रावण ७ गते तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तथा श्रावण १ गते तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम पाटन कुम्भेश्वर स्थित बगलामुखी मन्दिर प्रांगणमा सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म तथा अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो ।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय रामघाट पोखराको आयोजनामा गत श्रावण ७ गते बुधबार स्थानीय विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो भने यता सम्पर्क कार्यालय तनहुँको आयोजनामा श्रावण १ गते बिहीबार स्थानीय वेद व्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो । यी हवन कार्यक्रमहरू पनि बिहान ८:०० देखि ९:०० बजेसम्म सञ्चालन भएका थिए ।

यस्तै सम्पर्क कार्यालय भक्तपुरले पनि गत श्रावण महिनाबाट सूर्यविनायक मन्दिरमा तान्त्रोक्त गणपति हवन शुभारम्भ गऱ्यो । श्रावण ६ गते मंगलबार बिहान ७:०० देखि ८:०० बजेसम्म सम्पन्न भएको उक्त हवन कार्यक्रम प्रत्येक महिनाको पहिलो मंगलबार सोही समयमा सम्पन्न हुनेछ ।

## दिव्य गुरु महोत्सव

गोरक्ष निखिल वाणीको ५० जना सदस्य बनाएर विदुर श्रेष्ठ, खेमराज कार्की र मिनु सिग्देल लाममा बस्नुभएको थियो, त्यस्तै २० जना सदस्य बनाएर यशु अधिकारी, मञ्जु रेग्मी, विन्दु देवकोटा, श्यामलाल श्रेष्ठ, विजय शाही, केशवकुमार के.सी., सीता पाण्डे, विजय मानन्धर, दामोदर गौतम, शिव लामिछाने, सूर्य उपाध्याय, अमृता भट्टराई, शिवनारायण महर्जन, टोपबहादुर बस्नेत, सिद्धि महर्जन र शर्मिला के.सी. पनि लाममा बस्नुभएको थियो । केही छिनपछि उहाँहरू सबैको नाम क्रमैसँग बोलाइयो र माला पहिऱ्याउने र गुरु फोटो प्रदान गर्ने क्रम चल्यो । उहाँहरू सबैले सद्‌गुरुदेवहरूबाट प्रदान भएको विशेष धारण माला र सद्‌गुरुदेवहरूको फोटो उपहार हर्षित र गर्वित मुद्रामा लिनुभयो । परमपूज्य सद्‌गुरुदेवहरूको चिन्तन विस्तारमा महत्त्वपूर्ण योगदान रहेको पत्रिका सदस्य विस्तार योजनामा सहभागी भएपछि उहाँहरूलाई दिव्य गुरु महोत्सवको अवसरमा पुरस्कार प्रदान गरिएको थियो ।

गत श्रावण ६ गते गते मङ्गलबार (जुलाई २१ तारीख, २००९) काठमाडौँको जैन भवनमा आयोजित उक्त दिव्य गुरु महोत्सव विभिन्न कार्यक्रमहरूका बीच सम्पन्न भएको थियो । परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज डा. नारायणदत्त श्रीमालीको रूपमा यस धरतीमा अवतरित हुनुभएको पावन दिनको स्मरण गर्दै सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको छ ।

स्तवन वन्दनासँगसँगै बिहान १०:१५ मा शुरु भएको महोत्सवमा गुरु पादुकाको दिव्य पूजन, मन्त्रजप, हवन, आरती, भजन-कीर्तन, नृत्य आदि सम्पन्न भएका थिए । दिव्य गुरु महोत्सवमा पूजन गर्ने सौभाग्य आरती सञ्चालन केन्द्र म्हैपी, कीर्तिपुर, सिमलटार, गोंगबु, तीनकुनेले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरण गुरु सेवा दल नं ३७ का सदस्य जयबहादुर मल्लको स्वागत मन्तव्यबाट शुरु भएको थियो । यस चरणमा आरती संचालन केन्द्र सिनामंगलबाट सामूहिक नृत्य र आरती संचालन केन्द्र तीनकुनेबाट एकल नृत्य प्रस्तुत भएको थियो । महोत्सवमा भजन-कीर्तनहरू पनि प्रस्तुत भएका थिए जसले सबैलाई नचाउनुका साथै भावभक्तिमा चुर्लुम्म डुबाएका थिए ।

महोत्सवमा भवन निर्माणका लागि सीता पाण्डेले रु. १,००,००५।- (एक लाख पाँच रूपैयाँ) प्रदान गर्नुभएको थियो । महोत्सव दिउँसो ३:३० सम्म चलेको थियो ।

## श्रावण महिनाभर श्री शिव गोरक्ष महोत्सव

सिद्धाश्रम शक्ति केन्द्रले श्रावण महिनालाई श्री शिव गोरक्ष महोत्सवको रूपमा मनाउँदै आइरहेकोमा गत श्रावणमा पनि विशेष सुरक्षा मन्त्र जप अनुष्ठानका साथ मनायो । सर्वसाधारणले समेत जप्न मिल्ने गरी खुल्लारूपमा प्राप्त गोरक्ष सुरक्षा मन्त्र जप्दै महिनाभरमा धेरै सवालाख अनुष्ठानहरू साधक साधिकाहरूले पूरा गर्नुभएको थियो । अब आउन सक्ने विकराल परिस्थितिमा आफ्ना शिष्यहरूको रक्षा गर्नका लागि पनि हुनसक्छ सद्‌गुरुदेवहरूबाट यस्ता दिव्य कार्यक्रमहरू प्राप्त हुने गरेका छन् ।

# गुरुसेवा दलको तालिम

सिद्धाश्रम शक्ति केन्द्रले गत श्रावण २० र २१ गते कार्यकर्ताको दोस्रो वरिष्ठ तह गुरु सेवा दलको १२ औँ तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो ।

काठमाडौँको कमलपोखरीस्थित अग्रवाल भवनमा आयोजित दुई दिवसीय उक्त तालिम तथा प्रशिक्षण कार्यक्रम दुवै दिन बिहान १० बजे सद्‌गुरुदेवहरूको स्तुतिवन्दना-प्रार्थनाबाट शुरु भई साँझको नित्य आरतीपछि टुंगिएको थियो ।

विभिन्न सत्रमा सम्पन्न तालिम कार्यक्रमका दुवै दिन दिव्य गुरु पादुका पूजन सम्पन्न भएको थियो । शकुन्तला तिमिल्सिना, ज्ञानु रेग्मी, विष्णु सापकोटा, वृहस्पति सापकोटा, सुमित्रा लामा, भोजराज सापकोटा, मधुमति रंजित पूजनमा सहभागी हुनुहुन्थ्यो ।

उक्त कार्यक्रममा आन्तरिक संगठन, संस्थागत विचलन, सावर पन्थी तह, गुरुसेवा दल र संस्था, अ.ना.प. कार्यशैली, अध्यात्म आदि विषयमा प्रशिक्षार्थीहरूलाई प्रशिक्षित गराइएको थियो । उक्त अवसरमा विशेष ध्यानका प्रविधिहरू पनि प्रशिक्षार्थीहरूलाई हस्तान्तरण गरिएको थियो ।

कार्यक्रममा काठमाडौँ, ललितपुर, गोरखा, चितवन, स्याङ्जा, कास्की, लमजुङ, सर्लाहीलगायत जिल्लाबाट आउनुभएका प्रशिक्षार्थीहरूको सहभागिता रहेको थियो । प्रशिक्षणमा ५८ जना प्रशिक्षार्थीले सहभागिता जनाउनुभएको थियो ।

कार्यक्रममा सावर पन्थी सदस्य नं. ३ ज्यूले स्वागत मन्तव्य दिनुभएको थियो भने सावर पन्थी सदस्यत्रय र सावर मातृकाज्यूले प्रशिक्षार्थीहरूलाई प्रशिक्षण प्रदान गर्नुभएको थियो । कार्यक्रममा उद्घोषणको जिम्मेवारी निभाउने सौभाग्य सा.प. १ ज्यूले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको अन्तमा सुनाइएको ग्रेडिङ्गमा निखिल रङ, वैकल्पिक निखिल रङ, गोरक्ष रङ, वैकल्पिक गोरक्ष रङ, रातो रङ, वैकल्पिक रातो रङ, निलो रङ, वैकल्पिक निलो रङ र हरियो रङमा प्रवेश गर्नेहरूको नाम पढेर सुनाइएको थियो । गुरु सेवा दलको सदस्य कोटा ९७ पुगेको जानकारी पनि कार्यक्रममा दिइएको थियो ।

उक्त तालिम तथा प्रशिक्षण कार्यक्रमको बीचबीचमा प्रस्तुत चुड्का भजनले सबैलाई नचाउँदा प्रशिक्षणको अवधिमा थप जोश, जाँगर र आनन्द भरिएको थियो ।

# नयाँ सांगठनिक संरचना

परमपूज्य सद्‌गुरुदेवहरुको असीम कृपास्वरुप सिद्धाश्रम शक्ति केन्द्रको सांगठनिक संरचना अब नयाँ ढंगबाट गठित हुने क्रमको शुरुआत भएको छ । यसअन्तर्गत संस्थाको सबभन्दा निम्नतम औपचारिक इकाइको रुपमा हाल स्थापित सम्पर्क कार्यालयहरुको लागि सात सदस्यीय समूह गठनको प्रक्रिया शुभारम्भ भएको छ । यो समूहका सदस्यहरुलाई क्रमशः हाजिना, सहहाजिना, काजिना, सहकाजिना, मासान, सहमासान र जाइनी भन्ने नाम प्राप्त छ । यसको साथै तीनवटा सम्पर्क कार्यालयहरु यदि एउटै जिल्लाको निश्चित क्षेत्रमा रहेको खण्डमा दोस्रो इकाइको गठन हुने प्रावधान रहेको छ जसमा पनि सात सदस्यीय समूह गठन हुनेछ । यो समूहका सदस्यहरुलाई क्रमशः प्रजात, सहप्रजात, बोस्रा, सहबोस्रा, संकाली, काम्राज र काम्राज भनिनेछ । संस्थामा अज्ञात नाथ पन्थीको कार्यशैली भित्रिएपछिको प्रमुख सांगठनिक फेरबदलको रुपमा यसलाई लिइएको छ । हालसम्म पहिलो इकाइ गठन भएका स्थानहरुमा रामघाट पोखरा, बसुन्धरा काठमाडौँ, सिन्धुली, लेखनाथ कास्की, सौरपानी गोरखा, बनेपा काभ्रे, ललितपुर, बानेश्वर र विन्ध्यवासिनी पोखरा रहेका छन् भने कास्की जिल्लामा दोस्रो इकाइ गठन भइसकेको छ । आगामी दिनहरुमा यस संरचनाबाट संस्थाले अझ विस्तारित एवं सुव्यवस्थित रुप लिने आशा गर्न सकिन्छ ।

## रूसीहरुमा आध्यात्मिक चेतना जाग्दै

सिद्धाश्रम शक्ति केन्द्रको सांगठनिक पृष्ठभूमिलाई अन्तराष्ट्रियरुपमा दरिलोसँग पुनः एकपटक स्थापित गरेर सावरपन्थी सदस्य नं. १ र २ का सदस्यज्यूहरु गत श्रावण १४ गते स्वदेश फर्कनुभयो ।

गत आषाढ १० गते रुस प्रस्थान गर्नुभएका सावर पन्थी सदस्यज्यूहरुले त्यहाँ गणेश साधना पनि सम्पन्न गराउनुभएको थियो । यसैगरी सावर पन्थी सदस्यहरुको रुस भ्रमणको अवधिमा विभिन्न ध्यानका कक्षाहरु पनि सम्पन्न भएका थिए । रुस बसाइको अवधिमा संस्थालाई अझ व्यापकता दिने, संस्थाको इकाइ गठन गर्नेजस्ता विषयलाई महत्त्वका साथ लिइएको थियो ।

रुसजस्तो भौतिक सम्पन्नता र अति विकसित मुलुकमा सिद्धाश्रम शक्ति केन्द्रको अवधारणा फैलनु र गुरुदेवहरुको चिन्तन विस्तार हुनुलाई आफैमा ठूलो उपलब्धिको रुपमा लिइएको छ । श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको युग निर्माणको महत्वपूर्ण योजनालाई साकार रुप दिने कार्यमा संस्थाको अन्तराष्ट्रियकरण मेरुदण्डको रुपमा रहने विश्वास पनि गरिएको छ । सा.प. द्वयको यो चौथो रुस भ्रमण हो ।

## ऋषि तर्पणीमा पूजन

गत श्रावण २१ गते ऋषि तर्पणी (रक्षाबन्धन) को दिनमा सिद्धाश्रम शक्ति केन्द्र बसुन्धरामा विशेष गुरु पूजन, ऋषि पूजनको कार्यक्रम सम्पन्न भयो । बिहान ८:०० बजे स्तुति वन्दनाबाट शुभारम्भ भएको उक्त कार्यक्रममा सावरपन्थी नं. १, २ र ३ का सदस्यज्यूले पूजन गर्ने सौभाग्य पाउनु भएको थियो । पूजनपश्चात् गायत्री मन्त्रको उच्चारणका साथ नयाँ जनै धारण गरिनुका साथै रक्षाबन्धन अर्थात् डोरो बाँध्ने कार्यक्रम पनि रहेको थियो । कार्यक्रमपश्चात् प्रसाद वितरण पनि गरिएको थियो । कार्यक्रममा ५०० भन्दा बढी साधक साधिका भक्तजनहरूको सहभागिता थियो ।

**कीर्तिपुर (काठमाडौं)**: आरती संचालन केन्द्र कीर्तिपुरले गत श्रावण ५ गते स्थानीय कुशेश्वर महादेव मन्दिर परिसरमा जनसम्पर्क कार्यक्रमको आयोजना गऱ्यो । बिहान ६:३० बाट शुरु भएको उक्त कार्यक्रम करिब १ घण्टासम्म चलेको थियो ।

**विशालनगर (काठमाडौं)**: आरती सञ्चालन केन्द्र विशालनगरले गत श्रावण ३ गते भजनकीर्तन कार्यक्रम सहित आफ्नो वार्षिकोत्सव मनायो । मध्याह्न १२ बजेदेखि शुभारम्भ भएर अपराह्न ४ बजेसम्म चलेको उक्त कार्यक्रममा ४३१ जनाको उपस्थिति रहेको थियो ।

**गोदावरी (ललितपुर)**: गत श्रावण ४ गते आरती सञ्चालन केन्द्र गोदावरीले आफ्नो चौथो वार्षिकोत्सव भजनकीर्तन कार्यक्रमका साथ मनायो । अपराह्न १ बजेदेखि ४ बजेसम्म गरिएको उक्त भजनकीर्तन कार्यक्रममा ५० जना साधक साधिका, भक्तजनहरूको उपस्थिति रहेको थियो । साथै श्रावण महिनालाई श्री शिव गोरक्ष महोत्सवको रूपमा मनाउने क्रममा यस आरती सञ्चालन केन्द्रले श्रावणको प्रत्येक मंगलबार ओगरनाथमा रोट अर्पण पनि गऱ्यो ।

**तीनकुने (काठमाडौं)**: आरती सञ्चालन केन्द्र तीनकुनेले आफ्नो दोस्रो वार्षिकोत्सवको अवसरमा गत श्रावण १४ गते भजनकीर्तन कार्यक्रम सम्पन्न गऱ्यो । मध्याह्न १२ बजे प्रार्थना, स्तुतिवन्दनाबाट शुभारम्भ भएको उक्त कार्यक्रम अपराह्न ४ बजे समापन गरिएको थियो । उपस्थिति रेकर्डअनुसार कार्यक्रममा ३५१ जनाको उपस्थिति थियो ।

# श्री शिव गोरक्ष-नाथंप्रदाय

परमपूज्य सद्‌गुरुदेव श्री शिव गोरक्ष सम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा यस अंकदेखि श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमश: प्रकाशित गर्दै जानेछौं । आशा छ यसबाट श्री शिव गोरक्षको बारेमा थप जानकारी पाई पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।

श्री श्री महायोगी गुरु गोरक्षनाथ आफैमा आदि, अनादि, अजर, अमर कायायुक्त अद्वितीय, अवर्णनीय, व्यक्तित्व हुनुहुन्छ, साक्षात् भगवान शिव हुनुहुन्छ । यति मात्र नभएर भगवान् शिवका स्वरूपहरूका मूल आधार हुनुहुन्छ, सर्वाधिक महत्त्वपूर्ण र रहस्यले भरिपूर्ण भगवान् शिवका अवतार हुनुहुन्छ । यस्ता अद्वितीय र अवर्णनीय व्यक्तित्वका धनी, आदि अनादि भगवान् श्री शिव गोरक्षलाई वर्णनको सीमाभित्र राख्न सकिँदैन, न त नाथ सम्प्रदायभित्र नै । हुन त नाथ सम्दायको आफ्नै गौरवमय परम्परा छ । साक्षात् भगवान् शिवका स्वरूपहरू नै अद्वितीय महायोगीहरू हुनुभएका कारण नाथ सम्प्रदायको उच्चता, महानता पनि आफैमा अवर्णनीय छ । दिव्यतम योगी, महायोगी, सिद्ध, महासिद्ध, गुरु, महागुरु आदिले सजिएको, उहाँहरूको त्याग, तपस्या बलिदानबाट सिर्जिएको नाथ सम्प्रदायबाट नै सृष्टिले आफ्नो गति लिँदै आइरहेको छ । यसैले पनि यी शब्दहरू गुरु गोरखनाथ र नाथंप्रदाय आफैमा अति आदरणीय छन्, अति सम्मानित छन् । उच्च आदर, उच्च सम्मानको दायराभित्र, शब्द चर्चाभित्र न त वर्णन गर्न सकिन्छ, न त समेट्न नै । यसैले पनि शब्द चर्चाको परिधिभित्र राख्नै नसकिने यी विषयवस्तुलाई केवल जानकारी दिन प्रयास प्रयत्न गर्दै केही हदसम्म भए पनि सम्पूर्ण आदरणीय पाठकहरूमा यी श्रद्धारूपी, समर्पणरूपी शब्दहरू पस्किने कोशिश गरेका छौं । अद्वितीय, अवर्णनीय व्यक्तिलाई सीमित दायराभित्र राख्न खोज्नु मूर्खता पनि हुन सक्छ ।

आफ्ना परम आदरणीय, प्रात: स्मरणीय परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरक्षनाथसँग प्रत्यक्ष सरोकार राख्ने उहाँकै तपांशले सिर्जिएको नाथ सम्प्रदाय सम्पूर्ण सृष्टिकै मूल स्तम्भ हो । यसैले पनि अति नै महत्त्वपूर्ण विषयका बारेमा सोधखोज गर्नु हामी शिष्यको कर्तव्य हुन आउँछ, शिष्यधर्म हुन आउँछ । यसैले शिष्यधर्मभित्रबाट लौकिक समाजको सीमितताभित्रका सीमित परिधिबाट बुझ्न, भावना बनाउन, श्रद्धा, भक्ति जगाउनका खातिर पनि यस्ता विषय प्रसङ्गलाई समाजसमक्ष ल्याउनु आवश्यक एवं अनिवार्य ठानिन्छ । प्राचीनकालदेखि गुरु-शिष्य परम्पराभित्र विकसित हुँदै आइरहेको नाथ सम्प्रदायका बारेमा, नाथ योगीहरूको बारेमा सबैमा कौतुहल एवं जिज्ञासा हुनु स्वाभाविक पनि मान्नुपर्दछ । यसै स्वाभाविक कुरालाई मध्यनजर गर्दै समाजको प्रत्येक वर्गका व्यक्ति व्यक्तित्वका लागि संग्रहणीय होस्, भावना बनाउने माध्यम बनोस् भनी हामीले आफ्नो प्रयास, प्रयत्नलाई यहाँहरूसमक्ष राखेका छौं ।

विराट् व्यक्तित्वसँग सम्बन्धित विराट् संगठन, जसलाई नाथ सम्प्रदाय भनिन्छ, यी दुवैलाई कुनै सीमितताभित्र बाँध्न सकिँदैन । यसैले, हाम्रो सीमित दायराभित्रबाट असीमित व्यक्तित्वका मूर्धन्य धरोहरहरूलाई व्याख्या गर्न सक्ने कुरै भएन । यसैले जे जति उपलब्ध गराउन सफल भयौं, यसैलाई यहाँहरूले ग्रहण गरिदिनुहोला ।

# नाथ शब्दको रहस्य

"नाथ" शब्दभित्र निहित गूढतम रहस्यहरू, यसका अर्थहरू, यसका परिभाषाहरूका बारेमा केही बुझ्ने प्रयास गरौँ । नाथ भन्नेबित्तिकै सामान्य अर्थमा उच्चस्तरको, आदरणीय, मान्नुपर्ने व्यक्तित्वको रूपमा लिइन्छ । यसैले जहाँ नाथ शब्दको प्रयोग छ, जहाँ यसको प्रसङ्ग आउँछ, त्यहाँ सम्माननीय व्यक्तित्वको परिचय मिल्छ, क्षमतावान् व्यक्तित्वको उच्चताको झलक पाइन्छ । नाथ शब्दको शाब्दिक विश्लेषण गर्दा यसको अर्थ यसरी लगाइको पाइन्छ– ना (अनादि रूप) +थ (भुवनत्रयमा स्थापित हुनु) = नाथ । यसरी अनादिरूपबाट स्थापित धर्म, जसको कारणले भुवनत्रयको स्थितिको कारण बनेको छ, त्यही नै नाथ हो भनिएको छ जसलाई राजगुह्यमा यसरी उल्लेख गरिएको पाइन्छ–

**नाकारो नादि रुपं थकारः स्थाप्यत सदा ।**
**भुवनत्रय मेवैकः श्री गोरक्ष नमोस्तुते ॥**

अर्थात्, अनादिकालदेखि स्थापित तीन भुवनका स्वामी अनादि अनन्तनाथ श्री गोरक्षलाई नाथरूपमा नमन गर्दछु ।

नाथ शब्दलाई शब्द विन्यासबाट हेर्‍यौं भने 'नाथ' र 'अच्' बाट बनेको पाइन्छ । यसको अर्थ हुन्छ स्वामी, प्रभु, रक्षक, मायाजेता, कामजेता तथा साम्प्रदायिक अर्थमा एक सिद्ध, जो शिवतत्त्वको प्रमुख मानिन्छ । सन्त कवीरले पनि नाथ शब्दलाई मायाजेता अर्थात् त्रिभुवनजयीको रूपमा उल्लेख गरेका छन्– "नाथ सोई जो त्रिभुवन जती" ।

गोरक्ष सिद्धान्त संग्रहमा नाथ पदको आशय ब्रह्मा, विष्णु, रुद्र, शिव, भैरव, श्रीकण्ठ, सदाशिव, ईश्वर, सृष्टिकर्ता, परमपद, गुरु, परमतत्त्वको अर्थमा प्रयोग गरिएको छ । यसबाट पनि नाथ शब्दले दिव्यता एवं परमपदको अर्थ बोकेको पाइन्छ ।

नाथ शब्द तथागतको रूपमा स्थिरचित्त सिद्धि प्राप्त योगीको पर्यायवाचीको रूपमा प्रयोग भएको पाइन्छ ।

नाथ सम्प्रदायका मूल प्रवर्तक अलख निरञ्जन, निराकार, निर्विकार, निरामय, निर्विकल्प एवं अगम्य-अगोचर भगवान् शिव गोरक्षको रहस्यमय लीलाभित्र सिर्जिएको समस्त ब्रह्माण्डको रचना एवं नाथ सम्प्रदाय आफैमा रहस्यमय नै छ । सारा जीव जगत्को कल्याणार्थ कुनै बेला गुरु, कुनै बेला शिष्य, कहिले 'ज्योति'स्वरूप कहिले 'ॐकार' स्वरूप, कहिले अंशरूप, कहिले निराकार निर्गुण रूप त कहिले सगुण साकार रूप, यस्ता रहस्यमयी महायोगी महानाथको बारेमा जान्नु बुझ्नु ऋषिमुनि, देवीदेवताको वशको कुरा रहँदैन भने साधारण मनुष्यले बुझ्ने त प्रश्नै उठ्दैन ।

हाम्रा प्राचीन शास्त्रहरू एवं धरोहरहरूमा उल्लिखित विभिन्न प्रसङ्गहरूले नाथ शब्द धेरै प्राचीन भएको कुरालाई पुष्टि गर्दछन् । वैदिक कालमा पनि नाथ शब्दको विभिन्न अर्थ लगाइएको पाइन्छ, साथै वेदमा पनि यस शब्दको उल्लेख भएको पाइन्छ । ऋग्वेदको दशम मण्डलको १३० औं सूक्तमा नाथ शब्द सृष्टिकर्ता, ज्ञाता र सृष्टिकारकका रूपमा प्रयुक्त भएको पाइन्छ जुन कुरा सिद्धनाथ संहितामा उल्लेख गरिएको छ ।

'शक्ति संगम तन्त्र'मा नाथ शब्दको व्याख्या गर्दै यसलाई यसरी परिभाषित गरिएको पाइन्छ– 'ना' शब्दको अर्थ नादब्रह्म जुन मोक्ष ज्ञानप्रदायकको रूपमा दक्ष मानिएको छ भने 'थ'को अर्थ अज्ञानलाई विनिष्ट गर्नेवाला मानिएको छ । यसरी 'नाथ' शब्दलाई ब्रह्म साक्षात्कारको माध्यम एवं अज्ञानतालाई हटाई ज्ञान प्रदान गर्ने मानिएको पाइन्छ । ऋग्वेदमा 'नाथ' शब्दलाई सृष्टिकर्ता, ज्ञाता एवं सृष्टिकारको रूपमा प्रयोग गरेको पाइन्छ । संस्कृतिका भाष्यकार मुनिदत्तले नाथ शब्दलाई सद्गुरुको अर्थमा दिएका छन् । नाथ शब्दलाई बौद्धमार्गीहरू एवं जैन र वैष्णव ग्रन्थहरूमा पनि उच्च आदरका साथ लिइएको पाइन्छ । त्यस्तै नाथ सम्प्रदाय भगवान् आदिनाथबाट शुरु भएको र आदिनाथ भगवान् शिव हुनुभएकोले पनि नाथ शब्दलाई शिवको पर्यायको रूपमा लिइएको छ ।

नाथ शब्दलाई परिभाषित गर्न खोज्नुभन्दा पहिला, यसको अर्थ बुझ्नुभन्दा पहिला यस शब्दको प्रयोग हुने

अवस्थाको बारेमा बुझ्नु अति आवश्यक हुन्छ । नाथ शब्द सिद्धमार्ग, योगमार्गको प्रतिनिधित्व गर्ने शब्द हो । अझ यसभन्दा माथि उठेर हेर्दा श्री गुरु शिव गोरक्षका दिव्यतम वाणीहरूमा, उहाँका महाज्ञानहरूमा सिद्धान्तका व्याख्याका क्रममा स्वयंलाई 'नाथ' शब्दले संकेत गर्नुभएकोले यस शब्दको विशिष्टताको चर्चा असम्भव छ । सम्पूर्ण चराचर जगत्लाई आफ्नो योगबलले चलायमान गराउनुहुने भगवान् श्री गुरु शिव गोरक्ष जो सम्पूर्ण नाथहरूमा श्रीनाथ, आदिनाथ आदि नामले चिनिए पनि नाथहरूमा उहाँ महानाथ हुनुहुन्छ ।

नाथ शब्द सिद्धहरूका लागि प्रयोग हुने गर्दछ । कुनै पनि साधक, योगी तब मात्र सिद्ध कहलाउन योग्य हुन्छ जब उसले परमतत्त्वलाई बुझेको हुन्छ, शिव र शक्तिको सायुज्यतालाई बुझेको हुन्छ, सिद्धि र शक्तिलाई आत्मसात् गरेको हुन्छ । यसैले जो व्यक्तिले आफ्नो देहलाई गुरुकृपा एवं साधनाले सिद्ध गराउन सक्दछ, त्यो व्यक्ति नै सिद्ध हुन्छ । त्यस्तै नाथ शब्दले मूलतः योगमार्गको प्रतिनिधित्व गर्ने भएकोले जो वास्तविकरूपमा योगी हुन्छ त्यस्तो व्यक्ति नै नाथको लागि भागीदार हुन्छ । योगमार्ग नै त्यस्तो मार्ग हो जहाँबाट प्रत्येक साधक सिद्ध बन्न सक्दछ, योगी बन्न सक्दछ । परमात्मारूपी परब्रह्ममा लीन हुने प्रक्रिया नै योगमार्गको लक्ष्य हुन्छ । यस्तो लक्ष्य प्राप्त गर्ने व्यक्ति नै नाथ हुन्छ । नाथ योगी सर्व निरपेक्ष परमतत्त्वलाई शिव मान्दछन् । सारा जगत्को भेद अभेदभन्दा सर्वथा भिन्न भगवान् शिव स्वयं प्रकाश र चेतनाभन्दा सत्‌चित्‌आनन्दस्वरूपमा हुनुहुन्छ । उहाँकै शक्ति जगत्को नाम-रूपात्मक सत्ताको रूपमा अभिव्यक्त भएको छ । यसरी एउटै तत्त्व आफ्नो शाश्वत् एवं निरपेक्ष दशामा शिव हुन्छ भन्ने गत्यात्मक एवं सापेक्ष अवस्थामा शक्ति । मानव शरीरमा अवस्थित छन् शिव र शक्ति जसको योग नै साधकको लक्ष्य हो । साधकहरू योग, साधनाद्वारा मन, बुद्धि, इन्द्रिय एवं भौतिक शरीरका सीमाहरूलाई पार गरी परमतत्त्व शिवमा एकाकार हुन्छन् । यही शिवमा लय हुनेलाई नाथ योगी भनिन्छ । संसारमा रहेर पनि विषय-भोग, सांसारिक मायाजालबाट माथि उठ्ने व्यक्तिलाई नै नाथ भनी परिभाषित गरिएको पाइन्छ जसलाई गोरखवाणीमा यसरी उल्लेख गरिएको छ–

**हसिबा षेलिबा धरिबा ध्यान ।**
**अहनिसि कथिवा ब्रह्म गियांन ॥**
**हसै षेलै न करे मन भंग ।**
**ते निहचल सदा नाथके संग ॥**

मनुष्य जीवनको सार्थकता भन्नु नै यसको उचित सदुपयोग गर्नु हो न कि व्यर्थमा निष्फल गर्नु । सांसारिक राग-रंग तथा आनन्द-उत्सवहरूमा संलग्न हुँदै, रम्दै-रमाउँदै यी सम्पूर्णबाट माथि उठेर अनासक्त भई जीवात्माले परमात्माको ध्यान, चिन्तन र स्मरणमा निरन्तर लागिरहँदै ब्रह्मज्ञान, परमात्मस्वरूपको मनन, विचार गरिरहनुपर्दछ । मनलाई वशमा राख्ने प्राणीलाई नै नाथ भनिन्छ । साथै परब्रह्म परमात्मासँगको सहज सम्बन्धले योगयुक्त रहने व्यक्ति नै योगी हो ।

> सारा जीव जगत्को कल्याणार्थ कुनै बेला गुरु, कुनै बेला शिष्य, कहिले 'ज्योति'स्वरुप कहिले 'ॐकार' स्वरुप, कहिले अंशरुप, कहिले निराकार निर्गुण रुप त कहिले सगुण साकार रुप, यस्ता रहस्यमयी महायोगी महानाथको बारेमा जान्नु बुझ्नु ऋषिमुनि, देवीदेवताको वशको कुरा रहँदैन भने साधारण मनुष्यले बुझ्ने त प्रश्नै उठ्दैन ।

यसरी नाथ भनेको सांसारिक प्रपञ्चहरूबाट माथि उठी सधैं ब्रह्मज्ञान प्राप्तिको लागि अविरल लागिरहने, मनलाई जित्ने, मनको स्वामी भनी स्पष्टरूपमा व्याख्या गरिएको छ । गुरु-शिष्य परम्पराको गौरवशाली परम्परामा विकसित हुँदै आएको 'नाथ सम्प्रदाय'भित्र 'नाथ' शब्द मात्रै प्रयोग भएमा महायोगी श्री गुरु गोरक्षलाई बुझिन्छ । त्यस्तै, आफ्नो गुरुले योग्य एवं सक्षम ठानेको खण्डमा कान चिरी 'नाथ' नामले विभूषित गरी नाथ योगीको दर्जामा राखिएको पाइन्छ ।

नाथको परिभाषालाई विदेशी लेखकहरूले 'कान चिरी कुण्डल लगाएका व्यक्ति नाथ हुन्, साथै कानफट्टा योगीहरू नै नाथ हुन्छन्' भनी उल्लेख गरेको पाइन्छ । नाथ सम्प्रदायको विकाससँगै नाथ योगीहरूमा जुन किसिमको नीति, नियम र अनुशासन हुनुपर्थ्यो, त्यसको अभावमा आजसम्म आइपुग्दा केवल नाथ भनेको कान छेडेर कुण्डल लगाएका व्यक्ति हुन् भन्ने संकुचित परिभाषा सर्वमान्य हुन पुगेको छ । कान छेडेर कुण्डल लगाएकै भरमा कुनै जोगी, योगी वा कुनै व्यक्ति वास्तविकरूपमा नाथ योगी हुन सक्दैनन् । नाथ योगी हुनलाई श्री गुरु गोरक्षप्रदत्त ज्ञान प्राप्त गरेको, उहाँले शुरुआत गर्नुभएका पद्धति, सिद्धान्तहरूलाई अङ्गीकार गरी अगाडि बढेको, कर्तव्यनिष्ठ सच्चा गुरुभक्त क्षमतावान् व्यक्ति हुनु आवश्यक छ । नाथ योगी हुन कुण्डल लगाउने आदि आफ्नै किसिमका नियमहरू छन्, पद्धतिहरू छन्, आफ्नै किसिमका विशिष्ट विधि-विधानहरू छन् । क्रमशः

जय गुरुदेव !

# जरा छोडेर बोक्रातिर लाग्दा

एघारौं वर्षको पहिलो अंक तपाईंको हातमा छ। एउटा सानो दुई पानाको मुखपत्रबाट शुभारम्भ भएको यस पत्रिकाको इतिहास आफैमा रोचक र अपत्यारिलो छ। घोर कलिकालको भौतिकताले ग्रस्त समाजमा विशुद्ध आध्यात्मिक पत्रिका प्रकाशन नै आफैमा चुनौतीपूर्ण थियो भने एक दशकसम्म अटुट र अनवरतरुपमा प्रकाशित हुनु वर्तमान परिवेशमा सम्भव लाग्ने कुरा होइन तर यो असम्भवलाई सम्भव बनाएको छ तपाईंको आफ्नै पत्रिका गोरक्ष निखिल वाणीले। दश वर्ष बितिसकेछ, विगतले हामीलाई धेरै पाठ सिकाएको छ। दुःख, संघर्ष, अभावमा पनि कसरी बाँच्ने भन्ने कला सिकाएको छ। आध्यात्मिक पत्रिकाले निरन्तरता पाउनै सक्तैन भनेर हतोत्साही गर्नेहरुलाई दरिलो जवाफ बनेर उभिएको छ। यो पत्रिका छ महिनामै बन्द हुन्छ भनेर अड्कल काट्नेहरुलाई पनि जिब्रो टोक्न बाध्य बनाएको छ।

हाम्रो समाजमा राम्रो काम गर्नेलाई कहिले पो प्रोत्साहन मिलेको छ र? कसैले एक छाक खान पाइनँ, मलाई सहयोग गर्नुहोस् भनेर साथीभाइ, इष्टमित्रलाई गुहार्‍यो भने सहयोग गर्ने कोही हुँदैनन् तर त्यही व्यक्ति रक्सी खान, जुवातास खेल्न भन्यो भने तिनै साथीभाइले जति पनि सहयोग गर्छन्। मन्दिर बनाउन, आश्रम बनाउन, दान पुण्य आदि पवित्र कर्म गर्न सहयोग माग्दा टाउको कन्याउनेहरु पिकनिक जान, क्यासिनो जान, रेस्टुरेण्ट जान, जाँडरक्सी खान जति पनि खर्च गरिरहेका छन्। जीवनमा कति दुःख गरेर कमाएको धन दुरुपयोग भइरहेकोमा उनीहरुलाई कुनै अफसोच छैन। चाडपर्व, विभिन्न संस्कार आदिमा महंगा लुगा र गहनामा ठाँटिएर आफूलाई मै हुँ भनेर देखाउन जति पनि खर्च गर्न सक्छन् तर त्यही चाडपर्व विशेषको पूजन, हवन आदि मूल कर्मका लागि भने...। बिहे गर्छन् तर संस्कारका लागि भन्दा सम्मानका लागि खर्च गर्छन्। सप्ताह लगाउँछन् तर पुराण सुन्नुभन्दा दोहोरी गाएर कम्मर हल्लाउँदामा नै धर्म कमाएको ठान्छन्। हुन त लोकतन्त्रमा सबैलाई छुट छ। जसलाई जे गर्दा आनन्द आउँछ, उसले त्यही गर्न पाउँछ। तर बडो विचित्रको कुरो त के छ भन्दा अहिले हाम्रो समाज मूल अर्थात् जरोलाई छोडेर पात टिप्नमै मस्त छ। तीजको दिन व्रत बस्छन् कि बस्दैनन् तर रवाफ देखाउन भने एक महिनाअघिदेखि दर खाने भन्दै एकअर्काको घरघर धाउँछन्। दशैंमा घरमा जमरा राखेर दुर्गापूजा गर्न बिर्सिसके, खसी काटेर रक्सी खान अनि जुवातास खेल्न चाहिं कसैले सिकाउनु पर्दैन। अब भन्नुस् त, जसलाई तीज कहिले पर्छ भनेर थाहा छैन, ऊ एक महिनाअघिदेखि दर खान हिंडिरहेको हुन्छ। जसको घरमा दुर्गापूजा गरिंदैन, ऊ विजयादशमी मनाउन लागीपर्छ। छैन त अचम्म? यस्तो चलन विश्वमा कतै पनि छैन होला। सबैको आआफ्नो धर्म, संस्कृति, रीतिरिवाज हुन्छ। सबैले चाडपर्व मनाउँछन् तर हामी नेपालीहरु विश्वमै संस्कृतिका धनी भनेर चिनिन्छौं तर संस्कृतिको नाममा विकृतिलाई यसरी नै भित्र्याउँदै जाने हो भने कुनै दिन संस्कृतिको धनी होइन, विकृतिको धनी मुलुक भनेर चिनिन बेर नलाग्ला। चाडपर्वको मौसम शुरु भइसकेको छ। तसर्थ अनावश्यक धाक, रवाफ देखाएर समाजमा विकृति फैलाउनेतर्फ नलागौं। यसको मूल मर्मलाई आत्मसात् गरेर यी चाडपर्वको भावनाअनुरुप आफूलाई परिवर्तन गर्ने संकल्प गरौं। समाज त्यसै रुपान्तरित हुँदैन। यसका लागि संकल्पवान् व्यक्तिहरुको आवश्यकता हुन्छ। शुरु कहीं न कहींबाट हुनैपर्छ। आजै, अहिल्यै, यही क्षणबाटै परिवर्तनको शुरुआत हुनुपर्छ नत्र संस्कृतिको नाममा भित्रिएका विकृतिले तपाईं हामी मात्र नभई आउने पुस्तालाई समेत गाँज्नेछ र नेपाल भनेको एकादेशमा संस्कृतिको धनी राष्ट्र थियो रे भनेर कथा सुनाउनेछन् हाम्रा सन्ततिले। अस्तु।